# वैदेशिक सहायता नीति, २०५९

## १. वैदेशिक सहायताको भूमिकाः एक सिंहावलोकन

१.१ नेपालले सन् पचासको दशकको मध्यतिर प्रथम पञ्चवर्षीय योजना (२०१३-२०१८) को थालनीसँगै योजनाबद्ध विकास प्रक्रियामा प्रवेश गरेपछि विकास खर्च जुटाउने संयन्त्रको रूपमा वैदेशिक सहायताको सुरुवात भएको हो । त्यस समयदेखि विकास खर्चको वार्षिक खर्चको वार्षिक सरदर ५५ प्रतिशत वैदेशिक सहायताबाट व्यहोरिंदै आएको छ । हाल कुल गार्हस्थ्य उत्पादनमा वैदेशिक सहायताको अंश वार्षिक सरदर ५-६ प्रतिशत र कुल सरकारी खर्चको सरदर २५-३० प्रतिशत रहेको छ । क्षेत्रगत वितरणको हिसाबले वैदेशिक सहायताको सबैभन्दा बढी अंश कृषि, वन र मत्स्यपालन कार्यक्रममा खर्च भएको छ भने त्यसपछि उर्जा, यातायात, स्वास्थ्य, सामाजिक विकास र मानव संशाधन विकास जस्ता क्षेत्रहरूमा सहायता प्रवाहित भएको छ ।

१.२ नेपालको विकासमा वैदेशिक सहायताले महत्वपूर्ण भूमिका निर्वाह गर्दै आएकोछ । सार्वजनिक लगानीलाई दिगो बनाउनमा योगदान पुऱ्याउनुको अतिरिक्त दिगो र उच्च आर्थिक वृद्धि हासिल गर्दै आवधिक योजनाहरूद्वारा निर्धारित गरिबी निवारण गर्ने उद्देश्य पूरा गर्न र महत्वपूर्ण क्षेत्रगत कार्यक्रम तथा क्रियाकलापहरूलाई टेवा पुऱ्याउन वैदेशिक सहायताबाट उल्लेखनीय सहयोग पुगेको छ । नेपाली अर्थतन्त्रमा संरचनात्मक बाधा, ठूलो वित्त एवं वाह्य घाटा र असन्तुलित बचत तथा लगानी अनुपात विद्यमान भएकोले वैदेशिक सहायताको भूमिका महत्वपूर्ण हुन्छ । वैदेशिक सहायताले देहाय बमोजिम सहयोग पुऱ्याउँछः-

(क) नेपालको न्यून आन्तरिक बचतको पूर्तिमा टेवा दिई यसलाई बढाउन र गरिबी निवारणको लागि साधन परिचालन गर्न सहयोग पुऱ्याउने ।

(ख) विकासका क्रियाकलापहरूलाई द्रूतगति प्रदान गर्न प्रथमिकता प्राप्त क्षेत्रहरूमा सहायता राशि प्रवाहित गर्ने ।

(ग) प्रत्यक्ष वैदेशिक लगानी र निजी क्षेत्रको लगानी आकर्षण गर्न उपयुक्त वातावरण सिर्जना गर्ने ।

(घ) अर्थतन्त्रको उत्पादन र वृद्धि गर्नका लागि प्रविधिको पहिचान, मूल्यांकन तथा अवलम्बन गर्न सकिने राष्ट्रिय क्षमता बढाउने, यो पक्ष गरिबी निवारण गर्ने आधारभूत शर्तहरूमध्ये एक हो ।

१.३ हालका वर्षहरूमा नेपालको वैदेशिक सहायताको संरचनामा आमूल परिवर्तन भएको छ । कूल वैदेशिक सहायतामा द्विपक्षीय सहायताको अंश घटेर हाल एक चौथाई भएकोछ । यसैगरी अनुदान सहयोगको अंश निरन्तर घट्दैछ भने ऋणको अंश बढेर कूल सहायताको तीन चौथाई भएकोछ । वर्तमान वैदेशिक सहायताको ढाँचाको अर्को महत्वपूर्ण विशेषता कूल सहायतामा प्राविधिक सहायताको अंश क्रमशः वृद्धि भइरहनु हो । कूल वैदेशिक सहायताको ४० प्रतिशत भन्दा बढी अंश प्राविधिक सहायताले ओगटेकोछ र प्राविधिक सहायताको महत्वपूर्ण भाग मानिएको आयोजना विशेषसँग नजोडिएको प्राविधिक सहायता (Free Standing Technical Assistance) सन् १९९०-१९९९ को अवधिमा वार्षिक १७ प्रतिशतका दरलेवृद्धि भएकोछ । कूल वैदेशिक सहायता राशिमा ऋणको अनुपात क्रमशः बढ्दै गएर नेपालले तिर्नु पर्ने वैदेशिक ऋण कूल गार्हस्थ्य उत्पादनको लगभग ५० प्रतिशत पुगेको छ, जुन अन्य विकासोन्मूख देशहरूको तुलनामा बढी नभए पनि नेपालको लागि भने बोझिलो हुँदै गएको छ ।

१.४ देशको अर्थतन्त्रमा वैदेशिक सहायताको महत्वपूर्ण भूमिकाको महसुस गरेर यस नीतिपत्रले विकास गतिविधिहरूका लागि बढ्दो साधनको आवश्यकताको परिपूर्ति गरी वैदेशिक सहायताको उपयोगबाट प्रभावकारी रूपमा विकासको प्रतिफल प्राप्त गर्न वैदेशिक सहायताको प्रक्रिया, यसमा भएका समस्या र सम्भावनाको विश्लेषण गर्न खोजेको छ । यस नीतिपत्रको सुरुमा राष्ट्रिय तथा दातृसमुदाय दुबै पक्षको दृष्टिमा वैदेशिक सहायताको विगतको उपलब्धि र समस्याबारे संक्षिप्त रूपमा पुनरावलोकन गरिनेछ । त्यसपश्चात् यी समस्याहरूको समाधान गर्न नेपाल सरकारले अबलम्बन गर्ने विभिन्न कदमहरू सहाताको प्रवाह र संरचनालाई नियमित गरी यस्तो सहायताको उपयुक्त परिचालन गर्न सुनिश्चित गर्ने नयाँ मार्गदर्शन, नीतिहरू र रणनीति उल्लेख गरिनेछ । यसका साथै दातृसमुदायबाट प्राप्त हुने सहायतामा यसले पार्ने असर र नेपालको विकास प्रयासमा सहयोग गर्न दातृसमुदायले समायोजन गर्नु पर्ने आफ्ना नीति एवं कार्यक्रमबारे पनि संक्षेपमा उल्लेख गरिनेछ ।

## २. वैदेशिक सहायताको उपलब्धिः प्रमुख मुद्दाहरू

२.१ नेपाल दक्षिण एशिया क्षेत्रमा ढिला गरी विकासको थालनी गर्ने देश मानिन्छ । नेपाल वाह्य संसारसँग सन् १९५० को सुरुदेखि मात्र खुला भएको हो र त्यसै बेलादेखि नेपालमा योजनाबद्ध विकास र वैदेशिक सहयोगको सुरुवातसँगै भएको हो । त्यसपछि समयको क्रमसँगै देशको सामाजिक, आर्थिक विकासको क्रममा वैदेशिक सहायता एक प्रभावकारी संयन्त्रको रूपमा स्थापित भई प्रमुख, भौतिक पूर्वाधारहरू, जस्तै- सडक, सिंचाई, जलविद्युत लगायतका शिक्षा, स्वास्थ्य, खानेपानी जस्ता क्षेत्रको विकासमा यसले महत्वपूर्ण योगदान गरेको छ । यस बाहेक वैदेशिक सहायताले समयसापेक्ष नीतिको निर्माणका लागि आवश्यक संवादको विकास गर्न, आर्थिक सुधारलाई मार्गनिर्देशन गर्न, सार्वजनिक नीति निर्माताको क्षमता अभिवृद्धि गर्न र सार्वजनिक सेवाहरूको लागि वित्तिय सहयोग प्रदान गर्ने समेत महत्वपूर्ण भूमिका खेलेको छ । नेपालमा वैदेशिक सहायता, आर्थिक सुधार र विकासका बीच लामो सम्बन्ध रहि आएको देख्न सकिन्छ । यी विविध उपलब्धिहरूका बाबजुद नेपालमा वैदेशिक सहायताका धेरै कमीकमजोरीहरू पनि छन् । देशमा जति मात्रामा वैदेशिक सहायता राशि प्रवाह भएको छ, त्यसको अनुपातमा आर्थिक वृद्धि हासिल गर्ने र गरिबी निवारण गर्ने कार्यमा आशातीत सफलता प्राप्त हुन सकेको छैन । यसैले वैदेशिक सहायता केही क्षेत्रमा अत्यन्त प्रभावकारी रहेको भएता पनि अन्य क्षेत्रमा कम प्रभावकारी रहेको छ । यो मिश्रित परिणामप्रति सहयोग प्राप्त गर्ने नेपाली र दातृ समुदाय बीच समान धारणा छ ।

२.२ वैदेशिक सहायता सम्बन्धी समस्याहरू नेपालको सन्दर्भमा मात्र भिन्नै भने होइनन् । अरू देशहरूमा पनि सहायता प्राप्त गर्ने देश र दातृपक्ष दुबैले वैदेशिक सहायता सम्बन्धी नीति, व्यवहार र कार्यविधिका सम्बन्धमा सरोकार जनाउँदै आएका छन् । सहायता प्राप्त गर्ने सबै देशहरूमा वैदेशिक सहायता सम्बन्धी साझा समस्या मात्र नभएर देश विशेषका केही छुट्टै समस्याहरू पनि हुन्छन् । नेपालका सन्दर्भमा पनि केही आफ्नै विशेष समस्याहरू छन् । यस्ता समस्याहरूमा कमजोर संस्थागत क्षमता, विकट पहाडी धरातल, आफ्नै प्रकारको भौगोलिक अवस्थिति, व्यापक गरिबी, जनसंख्याको उच्च बृद्धिदर र जल्दोबल्दो वातावरणीय चासो आदि प्रमुख हुन् र यिनले वैदेशिक सहायताको उपयोग गर्न र विकास प्रयासलाई निरन्तर अघि बढाउने कार्यलाई चुनौतिपूर्ण बनाएका छन् । वैदेशिक सहायता सम्बन्धी समस्याको परीक्षण गर्दा यी नेपालले सामना गर्नु परेका विशेष चुनौतिहरूलाई सदैव ध्यान दिनु आवश्यक छ । कतिपय अवस्थामा यी समस्याको समाधान गर्न नेपाल र दातृपक्षबीच पारस्परिक समझदारी बढाउनु पर्ने आवश्यकता पनि देखिन्छ ।

२.३ नेपालको विकासका लागि वैदेशिक सहायताको प्रवाहमा प्रशस्त वृद्धि भएता पनि यसबाट देशले उच्चतम फाइदा लिन सकिरहेको छैन । वैदेशिक सहायताबाट प्राप्त परिणाम र तिनको सुधारको सम्भावनाबीच अझै ठूलो भिन्नता रहेको छ । यसका धेरै कारणहरू छन् । विगतको लगानीबाट सिर्जना भएका आर्थिक वृद्धिको गति (Growth Impulses) अझै कमजोर रहेको, समग्र आर्थिक स्थायित्वका आधारभूत पक्षहरू अझै अस्थिर रहेको, सहायता सदुपयोग गर्ने क्षमता उल्लेख्य रूपले बढ्न नसकेको, विभिन्न क्षेत्रमा संस्थागत क्षमता कमजोर रहेको, विकासका आवश्यकताहरूलाई ग्रहण गर्न नसकेको आदि प्रमुख कारण हुन् । देशमा विगत पाँच दशकदेखिको प्रयास र बढ्दो वित्तीय तथा प्राविधिक सहायताको प्रवाहका बाबजुद यस्तो स्थिति अझै रहिरहनु ज्यादै दुःखलाग्दो कुरा हो । अप्रभावकारी वैदेशिक सहायता व्यवस्थापन तथा न्यून विकास प्रतिफल हुनुका प्रमुख कारणका सम्बन्धमा नेपाली पक्ष र दातृपक्ष दुबैका दृष्टिकोण तल उल्लेख गरिएका छन् ।

**दातृपक्षको धारणा**

२.४ विगत केही वर्षदेखि (खासगरी नेपाल विकास मञ्चको सन् २००० मा पेरिसमा भएको बैठक र तत्पश्चातके अवधिमा) नेपालमा वैदेशिक सहायताको प्रभावकारीतामा देखिएको मिश्रित प्रभाव, यसका कारणहरू र सम्भाव्य उपायहरूका बारेमा व्यापक छलफल हुँदै आएको छ । दातृसमुदायले वैदेशिक सहायताको प्रयोगका सम्बन्धमा औंल्याएका मुख्य सरोकारका विषयहरू (Concerns) यी हुन्- खासगरी दाता पक्षद्वारा खर्च व्यहोरिने विकास आयोजना कार्यक्रमहरूमा नेपाल सरकारको स्वामित्वको अभाव रहेको, खर्चको प्राथमिकीकरण र आयोजना कार्यक्रमहरूको तर्जुमा र कार्यान्वयन गर्ने विषयमा नेपाली पक्षबाट निर्देशन र नेतृत्वको कमी, खासगरी केन्द्रीकृत बजेट र योजना प्रणाली विद्यमान रहेको कारणले कार्यक्रम तर्जुमा र कार्यान्वयनमा स्थानीय संस्था, सामुदायिक समूहहरूजस्ता सरोकारवालाहरूको ज्यादै कम सहभागिता रहने गरेको, राष्ट्रको संस्थागत र ग्रहण गर्ने क्षमताको बारेमा ध्यान नदिई विकास आयोजना कार्यक्रमहरू बढाउन दबाब पर्ने गरेको, कमजोर संस्थागत क्षमता, खासगरी निजामती सेवाको कार्यसम्पादन स्तर कमजोर रहेको, न्यून तलब र सुविधा एवं गिर्दो मनोबल रहेको, कार्यक्रमहरूको अनुगमन र मूल्यांकन कमजोर भएको कारणले गर्दा उत्तरदायित्व र पारदर्शितामा कमी र साधनको चुहावट र दुरूपयोग हुने गरेको आदि । उक्त समस्याहरूको समाधान गर्न दाताहरूले नेपाल सरकारलाई सक्षम नेतृत्व लिन र स्वामित्व ग्रहण गर्न दवाव दिंदै कतिपयले सहायताको मात्रामा कम गरेको र कतिपयले सहायताका शर्तहरूलाई कठोर बनाउँदै ल्याएका छन् । अरू कतिपय दाताहरूले स्थानीय निकायहरू, गैरसरकारी

संस्थाहरू र सामुदायिक संस्थाहरूसँग प्रत्यक्ष सम्पर्क राखी काम गर्न थालेका वा आफ्नै संस्थाहरूद्वारा कार्यान्वयन वा अन्य परामर्श कम्पनीहरूलाई संलग्न गराई कार्यक्रमहरू कार्यान्वयन गर्न समेत थालेका छन् ।

**नेपाली पक्षको धारणा**

२.५ दाता पक्षका उपर्युक्त धारणाहरू नेपालीहरूले पनि केही रूपमा अनुभूत गरेका छन् । साथै नेपालमा वैदेशिक सहायताको प्रभावकारितामा समस्या देखापर्नुका पछाडि दातृपक्षका व्यवहार र कार्यहरू पनि उत्तिकै जिम्मेवार रहेको धारणा नेपाली पक्षले व्यक्त गर्दै आएका छन् ।

२.६ नेपालीहरूको दृष्टिकोणमा सरकारले निर्धारण गरेका विकासका प्राथमिकताहरू र दाता राष्ट्र तथा संस्थाहरूले निर्धारण गरेको प्राथमिकताहरूबीच तालमेल नमिलेको धारणा व्यक्त गरेका छन् । नेपाली पक्षका आफ्ना प्राथमिकता र दातृपक्षका प्राथमिकताहरूका बीचमा तालमेल गराउन सक्दो प्रयास भने भएको छ । यस्ता प्रयासहरूका बाबजूद धेरै आयोजना तथा कार्यक्रमहरू दातृपक्षद्वारा निर्देशित रहेको भन्ने आमधारणा रही आएको छ । परिणामतः वैदेशिक सहायताको प्रभावकारीतामा ह्रास आएको छ । यसको समाधानको लागि स्थानीय सरोकारवालाहरूसँग परामर्श समेत गरी राष्ट्रिय प्राथमिकताहरू निर्धारण गर्ने र तदनुरूप विकास आयोजनाहरूको छनौट स्थानीय आवश्यकता, मूल्य, मान्यता र क्षमता लगायत नेपालको आफ्नो विशेष परिस्थितिमा त्यस्तो सहयोग व्यवस्थापन योग्य र सम्भाव्य छ छैन भन्ने विषयमा ध्यान दिंदै सरकारले आफ्नै नेतृत्वमा विकासलाई गति दिनु पर्ने कुरा सबैले महसुस गरेका छन् । यसका लागि दातृपक्षले आफ्ना प्राथमिकताहरूमा सुधार गरी नेपालको प्राथमिकताहरूसँग तिनको तालमेल गराउनु आवश्यक छ ।

२.७ आयोजनाको तर्जुमा, कार्यान्वयन, सुपरिवेक्षण र मूल्यांकन जस्ता प्रक्रियाहरू कडाईका साथ पूरा गरी आयोजनाको पर्याप्त तयारी र व्यवस्थापन गर्ने परिपाटीको अभावको कारण वैदेशिक सहायताद्वारा संचालित आयोजनाहरूमा भएको लगानीबाट मुलुकले अधिकतम फाइदा लिन सकिरहेको छैन । फलस्वरूप कतिपय त्यस्ता आयोजनाहरूको कार्यान्वयन हुने गरेको छ, जसले जनताको आवश्यकता, मूल्य, मान्यता र क्षमतालाई प्रतिविम्बित गर्दैनन् । यसो भएबाट समग्रमै स्रोतको बाँडफाँडमा प्रभावकारिता आउन सकेको छैन । वैदेशिक स्रोतको प्रयोग पनि यस्तो प्रवृत्तिबाट अछुतो छैन । धेरैजसो आयोजनामा दिगोपना र मर्मत, सम्भारको विषय उपेक्षित भएको छ भने कतिपय

आयोजनाहरूमा नेपाल सरकारर नेपाली जनता जसको लागि आयोजना तर्जुमा गरिएको हो उनीहरूकै स्वामित्वको अभाव रहेको पाइन्छ । यसैगरी उपयुक्त मूल्यांकन (Appraisal) बिना आयोजनाको कार्यान्वयन गर्ने गरिएको कारण वैदेशिक सहायता आवश्यक नभएका स-साना आयोजनाहरूमा वा नेपालको सन्दर्भमा उपयुक्त नै नभएको क्षेत्रमा पनि वैदेशिक सहायता प्रवाहित हुन गएको छ ।

२.८ नेपालले ठूलो संख्याका दातृराष्ट्र तथा संस्थाहरूबाट सहायता प्राप्त गर्ने गरेको छ । क्षेत्रगत तथा राष्ट्रिय आवश्यकताको आधारमा प्राथमिकता निर्धारण हुन नपाउँदा र सही प्राथमिकताका आधारमा दातृपक्षसँग समन्वय हुन नसक्दा प्रभावकारी ढंगबाट दातृसमुदायलाई समन्वय गर्न कठिनाई आईपर्नुको साथै सहयोगका विभिन्न निकायलाई एकआपसमा परिपूरकको भूमिका निर्वाह गर्ने स्थिति बनाउन पनि सकिएको छैन । नेपालको आवश्यकता सम्बन्धमा प्रत्येक दातृसंस्थाको आफ्नै नीति, प्राथमिकता र धारणाहरू हुन सक्छन्, जुन नेपालको सन्दर्भमा अमिल्दा मात्र हुँदैनन्, एकअर्कामा विरोधाभासपूर्ण पनि हुन्छन् । वैदेशिक सहायता सधैं अति आवश्यकता भएको क्षेत्रमा मात्र प्रवाहित नहुनाले धेरै महत्वपूर्ण क्षेत्रहरूमा स्रोतको अभाव हुने गरेकोछ । दातृपक्षको विविध धारणाहरूमा सामञ्जस्य ल्याउन धेरै कठिन हुने र कहिलेकाहिँ यस्तो कार्यमा लामो समय लाग्ने समेत हुन्छ । यसैले वैदेशिक सहायताको समन्वय गर्ने कार्य बोझिलो र कठिन हुँदै गएको छ ।

२.९ नेपाली पक्षको बढ्दो चासो विशेष गरी वैदेशिक सहायताको परिवर्तित संरचनामा छ । सन् १९९९ मा नेपालले प्राप्त गरेको कूल वैदेशिक सहायता मध्ये पूँजीगत सहयोगको अंश आधा मात्र रहेको, प्राविधिक सहायताको अंश ४० प्रतिशत रहेको र बाँकी १० प्रतिशत सहायता भुक्तानी सन्तुलनमा सहयोग गर्न र आपतकालिन उद्धार कार्यको लागि प्राप्त भएको थियो । माथि उल्लेख भएको आधारमा हेर्दा प्राविधिक सहायताको अंशमा द्रूत गतिले वृद्धि हुने गरेकोछ । वैदेशिक सहायता प्राप्त हुने यस किसिमको विद्यमान परिपाटी उपयुक्त हो वा होइन भन्ने सम्बन्धमा दातृपक्ष र नेपाल दुबैले पुनरावलोकन गर्न आवश्यक भएकोछ ।

२.१० विदेशी दक्षहरूमा अत्यधिक भर पर्नाले प्राविधिक सहायताको जुन योगदान हुनुपर्थ्यो सो हुन सकेको छैन । पूँजीगत सहायतामा आवद्ध प्राविधिक सहायतामा अहिलेसम्म देशमा उपलब्ध प्राविधिक जनशक्तिको समुचित परिचालन हुनसकेको छैन । यसको फलस्वरूप अनुपयुक्त प्रविधि अपनाउन परेको स्थिति कायमै छ । आयोजना विशेषसँग नजोडिएको

प्राविधिक सहायता (Free Standing Technical Assistance) मा पनि स्थानीय संस्थाहरूको क्षमता वृद्धि गर्न स्थानीय प्राविधिक क्षमताको उपयोग गर्नुको साटो विदेशी दक्षहरूको अत्यधिक प्रयोग गर्ने गरिएको छ । यस्तो अवस्थामा प्राविधिक सहायता अनुदानको रूपमा नभई ऋणको रूपमा लिने गर्दा नेपालजस्तो अल्पविकसित देशको भविष्यमा ठूलो बोझको सिर्जना हुनजाने हुन्छ ।

२.११ वैदेशिक सहायतामा संचालित आयोजनाहरू चाहे ती जुनसुकै क्षेत्रमा किन नहुन्, तिनको कार्यान्वयनको विभिन्न तहमा विभिन्न किसिमका प्रविधिहरूको छनौट गर्नु पर्ने हुन्छ । नेपालमा अझै पनि वैदेशिक सहायता, खासगरी पूँजीगत सहायताको प्राविधिक पक्षको मूल्यांकन गर्ने उपयुक्त र प्रभावकारी संयन्त्रको व्यवस्था हुन सकेको छैन । विशेष गरी टर्नकी (Turnkey) आयोजनाहरूमा कस्तो प्रविधि प्रयोग गर्ने भन्ने निर्णय बाहिरबाटै गरिने हुँदा यस्तो प्रवृत्ति त्यस्ता आयोजनाहरूमा बढी देखिन्छ । यसले आयोजनाहरूको दिगोपना र तिनको मर्मत, सम्भारमा समेत ठूलो असर पारेको छ । यसैगरी उत्पादनको गुणस्तर बढाउने र लागत कम गर्न आवश्यक अनुसन्धान र विकास (R & D) को लागि साधनको व्यवस्था हुने गरेको छैन ।

२.१२ वैदेशिक सहायतासँग गाँसिएर आउने शर्तहरू दातृ संस्था, आयोजना र कार्यक्रम पिच्छे फरक फरक हुने गरेका छन् । वैदेशिक सहातासँगै शर्तहरू गाँसी पालना गर्न वाध्य बनाउने प्रचलनले गर्दा उपलब्ध वैदेशिक स्रोतको उच्चतम प्रयोग गर्न कठिनाई पर्ने गरेको छ । यसै गरी, यस्तो परिपाटीले उपयुक्त र कम खर्चिलो सामग्री, समय र प्रविधिको प्रयोग गर्नमा समेत अवरोध उत्पन्न भएको छ । कतिपय आयोजनामा राखिएका देशको वास्तविक अवस्था र आवश्यकतासँग मेल नखाने विभिन्न नीति र प्रक्रियागत शर्तहरूको कारण आयोजनाहरूबाट अपेक्षित उपलब्धि हासिल नभएको मात्र होइन, आयोजनाले लक्षित गरेको भन्दा प्रतिकूल प्रतिफल प्राप्त भएको समेत देखिन्छ । दातृपक्षको लागि शर्तहरू आवश्यक छन् । तर त्यस्ता शर्तहरू प्रस्तुत गर्दा सहायता प्राप्त गर्ने राष्ट्रसँग संयुक्त रूपमा छलफल गर्ने र दुबै पक्षको सहमतिमा मात्र राख्ने गरिनु पर्छ । क्षेत्रगत कार्यक्रम संरचनाको तर्जुमा र अवलम्बन गरेको खण्डमा यस्ता शर्तहरू व्यवहारिक बनाउनुको साथै कम गर्न सकिन्छ ।

२.१३ नेपालमा स्वीकृत वैदेशिक सहायताको प्रयोग गर्ने प्रक्रिया ज्यादै ढिलो छ । देशको संस्थागत क्षमतामा देखिएका कमजोरीहरूले यस्तो हुने गरेको छ । तर, यस किसिमको ढिलाई हुनुमा नेपालको समस्यालाई नबुझ्ने दातृपक्षको नीति, व्यवहार र प्रक्रियाहरूले

पनि भूमिका खेलेका छन् । देशको आन्तरिक संस्थागत क्षमतालाई ध्यानमा राखेर कार्यक्रमहरू तर्जुमा गरेको खण्डमा सहायताको उपयोग बढी वास्तविक हुन सक्छ । कार्यविधिमा सुधार गरेर मात्र पनि हुँदैन, आयोजनाको सुरुवात (Inception) तथा डिजाइन गर्दाको अवस्थादेखि यस्तो समस्या आउने भएकाले यो बेलादेखि नै सुधार गर्नु आवश्यक छ ।

२.१४ विभिन्न गैरसरकारी संस्थाहरूमार्फत ठूलो परिमाणमा वैदेशिक सहायता प्रवाह हुने गरेकोछ । त्यस्ता संस्थाहरूको योगदान महत्वपूर्ण रहेता पनि कतिपय संस्थाहरूले मुलुकको विकासका प्राथमिकता बारे ध्यान नदिई तथा आयोजनाको अति महत्वपूर्ण पक्ष दिगोपनलाई समेत वेवास्ता गरी आफ्नै प्राथमिकता र प्रक्रिया अनुरूप गतिविधि संचालन गर्ने गरेका छन् । यी संस्थाहरूले न त राष्ट्रिय प्राथमिकता अनुरूप साधनको प्रयोग गरेका छन्, न साधनको प्रयोग गर्दा स्रोतको किसिम, प्राप्त रकम आदिका बारेमा पारदर्शिता नै कायम गरेका छन् । यी संस्थाहरूका गतिविधिहरूलाई राष्ट्रिय प्राथमिकतासँग मेलखाने गरी संचालनगर्न लगाउन एवं साधनको समुचित उपयोग र तिनीहरूको काम कारबाहीमा पारदर्शिता समेतको सुनिश्चितता गर्न त्यस्ता संस्थाहरू मार्फत प्रवाह हुने सहायताको प्रतिवेदन लिने र अनुगमन तथा मूल्यांकन गर्ने व्यवस्था प्रभावकारी बनाउनु आवश्यक छ । यसैगरी नेपाल सरकारलाई प्राप्त हुने वैदेशिक सहायता राशि सम्पूर्ण रूपमा बजेटमा समावेश हुन सकेको छैन । दातृपक्षले बेलाबखत नेपाल सरकारका सम्बन्धित मन्त्रालय तथा विभागहरूलाई जानकारी नै नदिई आयोजना विशेषको खातामा सोझै रकम जम्मा गर्ने गरेका छन् । परिणामतः सहायता सम्बन्धी अभिलेखलाई अद्यावधिक गर्न तथा यस्ता कारोबारमा पारदर्शिता र जवाफदेहीता कायम गर्न कठिनाई पर्ने गरेको छ ।

२.१५ नेपाली अर्थतन्त्रको आयोजना कार्यान्वयन गर्ने क्षमता सन्तोषप्रद छैन । भरपर्दो सूचना प्रणालीको कमी र नियमित सुपरिवेक्षण तथा अनुगमनको अभावले गर्दा आयोजनाको प्रभावकारी कार्यान्वयनमा अवरोध आएको छ । फलस्वरूप, धेरैजसो आयोजना संचालनमा ढिलाई हुनुको साथै लागत बढी लाग्ने गरेकोछ ।

२.१६ विगत धेरै वर्षदेखि वैदेशिक ऋणमा वृद्धि भएको कारणले नेपालको तिर्नु पर्ने वैदेशिक ऋणको दायित्वमा क्रमशः वृद्धि भईरहेको छ । वैदेशिक ऋणमा अनुदानको अंश समेत रहने र सबैजसो ऋण सहुलियत दरमा उपलब्ध हुने भएता पनि वैदेशिक ऋणको भार बजेटमा निरन्तर रूपमा बढ्दो छ । यसैले नेपालले यस्तो ऋणको उपयोगमा बढी

छनौटपूर्ण र उत्पादनशील हुनु आवश्यक छ । यी केही प्रमुख समस्याहरू हुन्, जसले नेपालमा वैदेशिक सहयोगको दक्षतापूर्वक प्रभावकारी उपयोगमा अवरोध उत्पन्न गराएका छन् । यस्तो समस्या आउनुको प्रमुख कारणचाहिँ वैदेशिक सहायता सम्बन्धी गतिविधिहरूलाई परिचालन गर्न आवश्यक नीति र मार्गदर्शनहरू नहुनु नै हो । स्पष्ट राष्ट्रिय दृष्टिकोण तथा नीतिको अभावमा विकास आयोजनाहरू स्थानीय आवश्यकताभन्दा बढी दातृसंस्था वा दातृपक्षको विचार र धारणाद्वारा प्रभावित हुनु स्वभाविक हो । प्रस्तुत नयाँ वैदेशिक सहायता नीतिले यो आभावको पूर्ति गर्न खोजेको छ ।

## ३ वैदेशिक सहायता नीतिको परिवर्तित सन्दर्भ

३.१ नेपालले लामो समयदेखि वाह्य सहायताको आधारमा विकास कार्यक्रम र आर्थिक सुधार कार्यक्रमहरूको कार्यान्वयन गर्दै आएको छ । यस्तो सुधार कार्यक्रम अन्तर्राष्ट्रिय विकासको अनुभव तथा नेपाल सरकार र विश्वसमुदायबीचको अन्तरक्रियामा आधारित छ । विगत दशकमा राष्ट्रिय र अन्तर्राष्ट्रिय स्तरमा विकास सहयोगको स्थिति तथा परिवेशमा धेरै परिवर्तन देखिए । मुख्यतः विकासका प्रारूपहरूमा आफैंमा उल्लेखनीय परिवर्तन आए । विश्वव्यापीकरणको सन्दर्भमा, राज्य, बजार, निजी क्षेत्र, नागरिक समाजका संस्थाहरूको भूमिकामा नाटकीय परिवर्तनहरू भएका छन् भने लैङ्गिक मुद्दा, शासकीय व्यवस्था, पारदर्शिता, विकेन्द्रीकरण जस्ता विकासका सबै क्षेत्रमा सान्दर्भिक विषयहरू (Cross-cutting Issues) मा विश्वसमुदायले बढी ध्यान दिइरहेको स्थितिछ । आयोजना तथा कार्यक्रमहरूलाई छुट्टाछुट्टै रूपमा संचालन गर्नुको साटो अन्तरक्षेत्रगत, विषयगत सम्बन्ध स्थापित गरेर विकासको गतिविधिहरू संचालन गरेमा देशका आर्थिक र सामाजिक आवश्यकताहरूलाई सही रूपमा प्रतिविम्बित गर्न सकिन्छ भन्ने तथ्यलाई सर्वत्र स्वीकार गरिएको छ । यस्ता धारणाहरूले वैदेशिक सहायता प्राप्त गर्ने देशहरूमा गरिबी विरुद्धको लडाईका निमित्त विकास गतिविधिहरू गरिबी निवारण प्रतिफलमा (Poverty Reducing Outcomes) जोड दिने गरी राष्ट्रिय उद्देश्य तथा क्षेत्रगत लक्ष्यसँग आयोजनाहरूको क्रियाकलापलाई आवद्ध बनाउने गरी समग्र रूपको रणनीति तयार गर्नुपर्ने आवश्यकतालाई अझ टड्कारो बनाएका छन् ।

३.२ यी विकासक्रमहरूले वैदेशिक सहायता र विकास सहयोगका ढाँचा र परिमाणमा विभिन्न किसिमले प्रभाव पारेका छन् । यो नयाँ विकासक्रम तथा अन्तर्राष्ट्रिय विकास समुदाय र नेपाली विकास समुदायको समेत परिवर्तित विकास सम्बन्धी अवधारणाहरूका सन्दर्भमा वैदेशिक सहायता नीतिका मुलभूत मान्यताहरूमा पनि सोही अनुरूप परीक्षण र विश्लेषण

गर्नु पर्ने आवश्यकता महसुस भएको छ । गलत र अप्रभावकारी वैदेशिक सहायता नीति र व्यवहार चाहे ती सहायता प्राप्त गर्ने देशतर्फ हुन् वा दातृ पक्षतर्फ हुन् तिनले आर्थिक विकास र सुशासनलाई हानी पुऱ्याउने मात्र नभई अन्य अवाञ्छित असरहरू समेत ल्याउँछन् । यसको विपरित, विकास प्रक्रियामा पृथकीकरणलाई (Compartmentalization) घटाउने तथा दक्षता र पारदर्शिता बढाउने खालको वैदेशिक सहायता नीतिले देशको विकास प्रक्रियामा महत्वपूर्ण योगदान पुऱ्याउन सक्छ ।

३.३ विकास सम्बन्धी वर्तमान अवधारणाले दातृपक्ष र सहायता प्राप्त गर्ने देशबीच विकासमा सहकार्य गर्न जोड दिएको छ । दुर्भाग्यबस, नेपालजस्तो अति कम विकसित देशले प्राविधिक तथा आर्थिक साधन र विशिष्टताले सम्पन्न दातृपक्षसँग साझेदारको रूपमा सहकार्य गर्न ठूलो मेहनत गर्नु पर्ने हुन्छ । नेपालको सन्दर्भमा दातृपक्ष विकास सहयोग राशिमा आएको ह्रास बारे उल्लेख गर्छन् भने सहायताको प्रयोगबाट ढिलो र अपूर्ण उपलब्धि हासिल भएकोमा खिन्न र असन्तुष्ट छन् । यो विषय दस्तावेजहरूमा स्पष्ट उल्लेख भएको पनि छ । दस्तावेजहरूमा कमै पाइएता पनि वैदेशिक सहायता सम्बन्धी नीति, प्रक्रिया, शर्तहरू र अन्य क्रियाकलापहरूका सम्बन्धमा नेपाल सरकारर स्थानीय सरोकारवालाहरूले पनि असन्तुष्टि व्यक्त गरेका छन् । त्यसैले वैदेशिक सहायता सम्बन्धी नीति प्रक्रियामा पुनर्ताजगी गर्नु आवश्यक छ ता कि विकासका सहकर्मिहरू बीच आपसी समझदारी बढ्न र विद्यमान समस्याहरूको वास्तविक समाधानको मार्ग प्रशस्त हुन सकोस् ।

३.४ नेपाल सरकारले मान्दछ कि विश्वव्यापी रूपमा स्वीकृत सिद्धान्तहरू, अभिसन्धिहरू, नीतिहरू र प्रारूपहरूले विकासका लागि प्राप्त हुने वाह्य स्रोतलाई निर्देशित गरेका हुन्छन् । विकास नीतिका सम्बन्धमा राष्ट्रिय तथा अन्तर्राष्ट्रिय तहमा प्रशस्त सहमति र सम्झौताहरू भएका छन् । नेपाल हालसम्मका धेरैजसो अन्तर्राष्ट्रिय सन्धिहरू, व्यवस्थाहरू र सहमतिहरूमा संलग्न रहिसकेको छ । नेपाल संयुक्त राष्ट्र संघको सन् २०१५ सम्म विश्वमा आधा गरिबी घटाउने लक्ष्यप्रति प्रतिबद्ध छ । नेपाल अन्तर्राष्ट्रिय स्तरमा भएका वातावरण, महिला, बालबालिका, मानव अधिकार तथा सामाजिक शिखर सम्मेलन जस्ता अन्तर्राष्ट्रिय स्तरबाट पारित सम्झौताहरूको पनि समर्थन गर्दछ । नेपालले विकास नीतिहरू तर्जुमा गर्दा र वैदेशिक सहायताको उपयोग गर्दा अन्तर्राष्ट्रिय स्तरमा सहमति भएका उपायहरू अबलम्बन गर्न निर्धारित लक्ष्यहरू प्राप्त गर्न परिलक्षित गरेको छ ।

३.५ नेपालले गरिबी निवारणलाई उच्च प्राथमिकतामा राखेको छ । नेपालको आधा जनसंख्या गरिबीको रेखामुनि रहेको छ र एउटा प्रजातान्त्रिक मुलुकको रूपमा नेपाल निरपेक्ष गरिबीमा रहेका जनताको जीवनस्तर उकास्न प्रतिबद्ध छ । दिगो रूपमा गरिबी निवारण गर्न आर्थिक बृद्धि र सामाजिक क्षेत्रमा लगानी बढाउनेतर्फ उन्मूख सन्तुलित विकास रणनीति अपनाउनु पर्ने हुन्छ । आय गरिबी र मानवीय गरिबी दुबै कम गर्न नेपालले लक्षित गरेको छ । आर्थिक वृद्धि गरिबी निवारणको एक महत्वपूर्ण पूर्वशर्त हो । यसको अभावमा अन्य सरकारी प्रयासहरू उत्पादक हुन सक्दैनन् । आर्थिक वृद्धिसँगै सामाजिक कल्याण हासिल गर्नु पनि उत्तिकै आवश्यक छ । शिक्षा, स्वास्थ्य जस्ता सामाजिक क्षेत्रको विकासले आर्थिक वृद्धिमा महत्वपूर्ण योगदान पुग्न सक्छ । सरकारले आर्थिक र सामाजिक क्षेत्रको सूचक बनाउने क्रममा विभिन्न चरणमा प्रगतिको लागि सरकारी क्षेत्रको सकारात्मक हस्तक्षेप हुनसक्ने संकेत दिएको छ । यस्तो विकास प्रक्रियामा आर्थिक तथा सामाजिक क्षेत्रमा हुने लगानी उत्पादक हुनुको साथै उच्च प्रतिफल हासिलगर्न सहयोग पुऱ्याउँछ । विशेषतः गरिबी निवारणको लागि यस किसिमको विकास संरचना अन्तर्गत वैदेशिक सहायताको उपयोग गर्नु आवश्यक छ ।

३.६ नेपाल सरकारपनि देशको विकास नीतिलाई विकासका परिवर्तित अवधारणहरू अनुरूप बनाउने प्रक्रियातर्फ लागेको छ । साथै देशमा वैदेशिक सहायताको प्रयोगमा आइपर्ने बाधा अड्चन हटाउन समेत सरकार प्रतिबद्ध रहेको छ । यसै अनुरूप, नेपालले विगतको नेपाल विकास मञ्चको बैठकदेखि सुधारका विभिन्न उपायहरू अवलम्बन गर्दै आएको छ (यस सम्बन्धमा विस्तृत रूपमा छुट्टै उल्लेख गरिएको छ) । ती मध्ये वैदेशिक सहायता नीतिसँग सोझो सरोकार राख्ने, २०५८ मा तर्जुमा भएको अन्तरिम गरिबी निवारण रणनीतिपत्र, २०५९ भदौसम्म पूरा हुने हाल तर्जुमा भईरहेको दशौं योजना वा पूर्ण गरिबी रणनीतिपत्र र एवं गरिबी निवारणको कोष उल्लेख छन् । हाल तर्जुमा भईरहेको दशौं योजना विगतका योजनाहरूभन्दा देहायका कारणले भिन्न छ- (क) यसले समग्रतामा सरकारको विकास प्रयासको प्रमुख उद्देश्यको रूपमा गरिबी निवारणलाई लिएको छ । (ख) यसले विकास क्रियाकलापहरूलाई प्रत्यक्षतः क्षेत्रगत तथा राष्ट्रिय उद्देश्य एवं लक्ष्यहरू र गरिबी निवारण प्रतिफलसँग (Proverty Reducing Outcomes) आवद्ध गर्दै लान चाहेको छ । (विगतमा जस्तो लक्ष्य, साधनको प्रयोग र प्रतिबद्धतामा मात्र जोड नदिई) । (ग) यसले लक्ष्य निर्धारण, स्रोत व्यवस्था र वित्तीय तथा कार्यान्वयन क्षमतासँग वार्षिक बजेटलाई वास्तविक रूपले आवद्ध गराउने प्रयास गरेको छ ।

३.७ एकातिर वैदेशिक सहायताको प्रवाहलाई दीर्घकालिन विकासको अवधारणासँग आवद्ध गराउनु परेको छ भने अर्कोतिर नेपालले सामना गरिरहेको समस्यासँग जुध्न अल्पकालिन उपायहरूको अवलम्बन गर्नु पनि त्यत्तिकै आवश्यक छ । यससम्बन्धी दुई मुख्य तत्वहरूमा (क) शान्ति, सुरक्षाको चुनौति देशका दुर्गम क्षेत्रमा विकासका गतिविधिहरूमा कमी आउनुको अतिरिक्त सुरक्षा खर्चमा अत्यधिक रूपमा वृद्धि गर्न माग भएको छ । (ख) अर्थतन्त्रमा आएको मन्दी अन्तर्राष्ट्रिय मन्दीको कारणले र आंशिक रूपमा सुरक्षा लगायतका आन्तरिक घटनाले अर्थतन्त्रमा मन्दी आएको छ । परिणामस्वरूप, अनपेक्षित रूपमा नेपालको बजेटमा दवाव बढ्न गएको छ । सरकारको साधन जुटाउने थप प्रयासहरूका बाबजुद विकास कार्यको लागि समेत खर्च गर्न आन्तरिक साधन जुटाउने कार्यमा गम्भिर बाधा उत्पन्न हुने देखिएको छ । यसले गर्दा अन्तिम रूप दिन लागिएको दशौं योजनाको बृहत् आर्थिक संरचनामा समेत खर्च गर्न आन्तरिक साधन जुटाउने कार्यमा गम्भीर बाधा उत्पन्न हुने देखिएको छ । यसले गर्दा अन्तिम रूप दिन लागिएको दशौं योजनाको वृहत् आर्थिक संरचनामा समेत समायोजन गर्नु पर्ने देखिएको छ । यसैगरी योजनालाई वर्तमान वित्तीय अवस्थासँग आवत्त गर्दै यसका प्रमुख प्राथमिकताहरूको संरक्षण गर्ने उद्देश्यले नेपाल सरकारइतिहासमै पहिलोपल्ट छुट्टै रूपमा मध्यकालिन खर्च संरचना (Medium Term Expenditure Framework) को तर्जुमा गर्न लागिरहेको छ । मध्यकालिन खर्च संरचना दशौं योजनाको विकल्पको रूपमा तर्जुमा गर्न लागिएको नभई वार्षिक बजेटचक्र र दशौं योजना बीचको सेतुको रूपमा योजना संचालनको संयन्त्रको रूपमा आउन लागेको छ । यो संरचना सार्वजनिक खर्च कार्यक्रमलाई प्राथमिकीकरण गर्न र वार्षिक बजेट विनियोजनमा अरू बढी वास्तविकता ल्याउन सरकारद्वारा पहिलोपल्ट अघि सारिएको सत्प्रयास हो । विद्यमान वित्तीय संकटको समाधान गर्न सरकारबाट आफैं अघि सारिएको यो एक महत्वपूर्ण प्रयास हो । मध्यकालीन खर्च प्रणालीको तयारी सम्बन्धित मन्त्रालयले अर्थ मन्त्रालय र राष्ट्रिय योजना आयोगको सहयोगमा गरेको हुनाले त्यसमा अन्तरनिहित कार्यक्रमहरूमा सम्बन्धित मन्त्रालयको स्वामित्व रहने र त्यसलाई अन्तिम रूप दिन स्थानीय सरोकारवालाहरूसँग पनि व्यापक छलफल समेत गरिएको हुँदा यो एउटा क्षेत्रगत कार्यक्रमको आधार पनि हुन गएको छ । अन्तरिम गरिबी निवारण रणनीतिपत्र, दशौं योजना तथा मध्यकालिन खर्च प्रणालीले संयुक्त रूपमा गरिबी निवारण केन्द्रित सार्वजनिक स्रोत व्यवस्थापन गर्ने र नेपालको वैदेशिक सहायताको लागि सरकार र दातृ समुदायबीच हुने नयाँ सम्झौताको आधारको रूपमा यिनीहरूको प्रयोग गरिनेछ ।

३.८ विश्वभरी सरकारको भूमिकामा परिवर्तन भइरहेको सन्दर्भमा नेपालमा पनि सरकारले अहिलेको जसरी भूमिका निर्वाह गरिरहन सक्ने अवस्था छैन। त्यसैले आर्थिक र सामाजिक क्रियाकलापमा सरकारको भूमिकाको सामयिक पुनरावलोकन हुनु आवश्यक छ। सरकारले सार्वजनिक सेवा र वस्तुको वितरणमा प्रभावकारीता ल्याउने सन्दर्भमा निक्षेपण गर्ने वा करारमा दिने कार्यहरू छुट्याउन सक्यो भने यस्ता कार्यहरूमा नागरिक समाज, स्थानीय निकायहरू र निजी क्षेत्रलाई समावेश गर्ने विषयमा साधन खर्च हुन सक्छ । सरकारले आफूलाई बढीभन्दा बढी सहयोग र सहजकर्ताको रूपमा प्रस्तुत गर्दै जानेछ।

३.९ यही परिवेशमा वर्तमान वैदेशिक सहायता नीति दस्तावेज तयार गरिएको छ । यो दस्तावेजको कार्यान्यनले विकासका साझेदारहरूसँगको सम्बन्धलाई नयाँ रूप दिन र नेपाल सरकार, नागरिक समाज, दातृसमुदाय सबैलाई मार्गदर्शन गर्न तथा सीमित साधनलाई विकासको लागि उचित रूपमा परिचालन प्रयोग गर्न सहयोग पुऱ्याउनेछ। यो नीति अल्पकालिन, मध्यकालिन र दीर्घकालिन सबै दृष्टिले उपयुक्त हुनेछ । तर जब अर्थतन्त्रका संरचना र विभिन्न तत्वहरूमा परिवर्तन हुन्छन्, तब यस नीतिपत्रमा पनि समय समयमा परिमार्जन गर्नु आवश्यक हुन्छ ता कि परिवर्तनको परिवेश र सन्दर्भलाई आत्मसात् गर्न सकियोस्।

## ४. मार्गदर्शक सिद्धान्त तथा उद्देश्यहरू

४.१ वैदेशिक सहायता नीति मूलतः देशको विकास सम्बन्धी नीति तथा प्राथमिकताहरूको अभिन्न अंग हो । यी दुबै एक अर्कामा घनिष्ठ रूपमा एकीकृत नभएसम्म विकास गतिविधिको प्रभावकारिता र कार्यदक्षतामा प्रतिकूल असर पर्दछ । वैदेशिक सहायता विभिन्न दातृसंस्थाहरूबाट प्राप्त गरिन्छ र प्रत्येक संस्थाका आफ्नै धारणा, नीति, कार्यविधि र प्रचलनहरू हुने गर्छन् । वैदेशिक सहायताका विविध स्रोतहरूलाई एक आपसमा मेल खाने गरी एकरूपता कायम गर्न नसकिएमा नेपालजस्तो देशले यस सम्बन्धमा धेरै गम्भीर समस्याहरूको सामाना गर्नु पर्ने हुन्छ । दातृपक्षका फरक फरक नीति र कार्यविधिहरूमा एकरूपता ल्याउने विषयमा उल्लेख्य प्रगति भएको भएता पनि सुधार गर्नु पर्ने विषयहरू अझै धेरै छन् । खण्डित (Compartmentalized) आयोजना र कार्यक्रमबाट सिर्जित समानान्तर सहायता प्रणालीलाई नेपालले धान्न सक्दैन । यसमा समावेश गरिने नीतिहरूले मुख्यतः विद्यमान समस्याका समाधानमा सुधार गर्ने आशा गरिएको छ । यसका साथै विकास गतिविधिहरूमा नागरिक समाजको संस्थाहरूलाई संलग्न गर्न सबै किसिमका नीतिहरूको बीच तालमेल सुनिश्चित गर्नु पनि आवश्यक छ।

४.२ यस दस्तावेजमा समाजेश भएका नीतिहरू तथा रणनीतिहरू नेपालमा वैदेशिक सहायताबाट संचालित आयोजना तथा कार्यक्रमहरूको अनुभवका आधारमा तय गरिएका हुन् । नेपाल र दातृसंस्थाहरूबीच प्रशस्त सांस्कृतिक भिन्नता रहेका छन् । कुनै एउटा देशमा ठीक हुने विषय अर्को देशमा ठीक नहुन सक्छ । एउटा अल्पविकसित देशको रूपमा नेपालसँग संस्थागत व्यवस्था र जनशक्ति दुबैको कमी छ । यसैले आयोजना तथा कार्यक्रमहरू कार्यान्वयन गर्ने तरिकाहरू अपनाउँदा यस्ता संस्थागत कमी कमजोरीहरूका अतिरिक्त कार्यान्वयन गर्ने अधिकारीहरूले सामना गर्ने गरेका बृहत चुनौतिहरूको बारमो विशेष ध्यान दिनु जरुरी छ । यस दस्तावेजमा समावेश भएका नीतिहरूमा यी समस्याहरूलाई वास्तविक रूपले समेट्ने प्रयास भएको छ ।

**निर्देशक सिद्धान्तहरू**

४.३ वैदेशिक सहायताका सम्बन्धमा यहाँ उल्लेख भएका उद्देश्य तथा प्राथमिकताहरू देहायका पाँच मुलभूत सिद्धान्तहरूमा आधारित छन्:-

- पहिलो, वैदेशिक सहायता गरिबी निवारण गर्ने सर्वोपरी राष्ट्रिय उद्देश्य हासिल गर्ने तर्फ निर्देशित गरिनु आवश्यक छ । यस अन्तर्गत अर्थतन्त्रको उत्पादनशील क्षमताको अभिवृद्धिद्वारा आर्थिक वृद्धि हासिल गर्ने साथै महत्वपूर्ण सामाजिक पूर्वाधार सम्बन्धी आवश्यकतालाई सहयोग गर्ने कुराहरू पर्दछन् । साथै, विकास प्रक्रियालाई अघि बढाउने, विस्तार गर्ने र दिगो बनाउने सन्दर्भमा हालसम्म निर्माण भएका आधारभूत पूर्वाधारहरूको अधिकतम उपयोग गर्न आवश्यक सहयोग पुऱ्याउने विषयहरू पनि यस अन्तर्गत पर्दछन् ।

- दोस्रो, वैदेशिक सहायताको भूमिकालाई कुनै आयोजना विशेष मात्रामा सहयोग गर्ने सन्दर्भमा मात्र हेर्नु हुँदैन । क्षेत्रगत नीतिहरू अर्थतन्त्रगत नीतिका अभिन्न अंग भएका र कुनै एक दातृपक्षको सहयोगमा संचालित आयोजना तथा कार्यहरू क्षेत्रगत नीतिसँग आवद्ध हुनु पर्ने भएकोले यिनीहरूलाई समष्टिगत अर्थतन्त्र र क्षेत्रगत तहमा हेरिनु पर्छ ।

- तेस्रो, वैदेशिक सहायता नीति विकासको लागि साधन परिचालन गर्ने समग्र नीति अभिन्न भागको रूपमा हुनेछ ।

- चौथो, वैदेशिक सहायता नीतिले सरकारी विकास सहायता (Official Development Assistance) को उपलब्धता र उपयोगको तहमा एवं सरकारी तथा बाह्य दुबै क्षेत्रमा बढी पारदर्शिता सुनिश्चित गराउने छ।

- पाँचौं, अल्पकालीन र मध्यकालीन रूपमा वैदेशिक सहायताको परिमाण र गुणात्मकता वृद्धि गरिने भएता पनि दीर्घकालीन रूपमा स्थानीय स्रोतको परिचालनमा वृद्धि गरी स्रोत परिचालनमा आत्मनिर्भरता हासिल गर्न प्रयत्न गरिनेछ।

**उद्देश्यहरू**

४.४ वैदेशिक सहायता नीति दीर्घकालीन दृष्टिकोणद्वारा निर्देशित हुनुपर्छता पनि देशको अल्पकालीन आवश्यकतालाई पनि उपेक्षा गर्न हुँदैन भन्नेमा नेपाल सरकारविश्वास गर्दछ। दीर्घकालीन हिसाबले वैदेशिक सहायता नेपालको समग्र साधन परिचालनको स्वरूप (Framework) भित्र प्रभावकारी रूपमा आवद्ध हुनपर्छ र यसले देश विकासको प्रयासमा खासगरी गरिबी निवारण गर्ने उद्देश्य हासिल गर्न सहयोग पुऱ्याउनु पर्छ। यो अल्पकालको लागि पनि महत्वपूर्ण छ। तर तल उल्लेख भए अनुसार केही अरू विषयमा पनि ध्यान दिई सहायताको संरचनालाई निर्देशित गर्नु पर्छ।

४.५ यस वैदेशिक सहायता नीतिको कार्यान्वयनबाट देहाय बमोजिमका प्रमुख उद्देश्यहरू हासिल गरिनेछन्:-

(क) वैदेशिक सहायतामा संचालित विकास गतिविधिहरूलाई राष्ट्रियस्तरमा निर्धारण गरिएका प्राथमिकताहरूसित मेल खाने गरी संचालन गर्ने सुनिश्चितता प्रदान गर्ने। वैदेशिक सहायताबाट संचालित आयोजनाहरू र राष्ट्रिय प्राथमिकताहरू बीच मेल भएपछि वैदेशिक सहायतामा संचालित क्रियाकलापहरू समग्र विकास प्रक्रियाका अभिन्न अंग हुनेछन्।

(ख) वैदेशिक सहायताको गुणस्तर, प्रभावकारिता र दक्षता अभिवृद्धि गर्ने। नेपाल र दातृपक्ष दुबैमा आयोजना छनौट तर्जुमा, व्यवस्थापन, पुनरावलोकन, अनुगमन तथा मूल्यांकन गर्ने सन्दर्भमा उपयुक्त र व्यापक किसिमको नीति र प्रचलनलाई बढावा दिने।

(ग) विकास गतिविधिहरूको गरिबी निवारणमा योगदान बढाउन वितरणात्मक समतामा सुनिश्चितता ल्याउँदै उच्च आर्थिक वृद्धिदर हासिल गर्ने। यसको लागि

नागरिक समाज र निजी क्षेत्रका बीचको सम्बन्धमा सुधार गर्नु पर्ने, वैदेशिक सहायता नीति र अन्य विकास नीतिहरूका बीच परिपूरकता स्थापना गर्नु पर्ने र शासकीय व्यवस्था, लैङ्गिक विषय र वातावरण जस्ता क्षेत्रमा वैदेशिक सहायता अरू दक्षताका साथ उपयोग गर्नु पर्ने हुन्छ ।

(घ) नेपाल दातृसंस्थाहरू बीच समान साझेदारीको विकास गर्न आवश्यक व्यवस्था गर्ने । यस उद्देश्यले विश्वव्यापी रूपमा देखिएको विकास सम्बन्धी साझेदारीको संवाद र संचालनको अवधारणालाई राष्ट्रिय स्तरमा कार्यरूप दिनेछ ।

४.६ अर्थतन्त्रमा तत्काल देखिएका समस्याहरू र वैदेशिक स्रोतको प्रभावकारी उपयोगमा रहेका वाधाहरूको निदानका लागि आवश्यक अल्पकालिन र मध्यकालिन नीतिहरू यसपछिको खण्डमा प्रस्तुत हुनेछन् । त्यसपछिको खण्डमा वैदेशिक सहायतालाई दीर्घकालिन रूपमा मार्गदर्शन गर्ने नीतिहरू प्रस्तुत गरिनेछन् ।

## ५. सहायताका अल्पकालिन प्राथमिकताहरू

५.१ नेपालमा वैदेशिक सहयोगका उपलब्धिहरूका बारेमा दातृपक्ष र नेपाली समकक्षीहरूका बीच रहेका चासोहरू र चुनौतिका बारेमा माथि उल्लेख गरियो । यस्ता चासोहरूलाई ध्यानमा राखी नेपाल सरकारले केही महत्वपूर्ण प्रयासहरूको सुरुवात गरेकोछ । यस्ता प्रयासहरूमा गरिबी निवारण रणनीतिपत्र र मध्यकालीन खर्च व्यवस्थाका साथै बजेट विनियोजन र व्यवस्थापन प्रक्रियामा गरिने सुधार पनि हुन् । सरकारको नेतृत्व एवं स्वामित्वमा तयार भएका गरिबी निवारण रणनीतिपत्र तथा मध्यकालिन खर्च व्यवस्थाले सरकारी खर्चको जोड (Focus) मा सुधार ल्याउन आवश्यक प्रयास गरेका छन् । मध्यकालिन खर्च व्यवस्था चाहिँ साधनको अपर्याप्ततालाई ध्यानमा राखी साधनको उपलब्धता अनुकूल वास्तविक लेखाजोखामा आधारित बजेट अवधारणाको विपरित छ । चाहिनेभन्दा बढी कार्यक्रम नगर्ने ध्येयले मध्यकालिन खर्च व्यवस्थामा धेरै हदसम्म विकास कार्यक्रम एवं क्रियाकलापहरूलाई प्राथमिकीकरण गरी वस्तुपरक बनाइएको छ । आगामी दिनहरूमा सम्पन्न गर्नु पर्ने कार्यहरू धेरै भएता पनि सरकारले सहायता कार्यक्रम र सार्वजनिक खर्चको व्यवस्थापनको प्रभावकारितामा रहेका वाधाहरूसँग जुध्न दृढ प्रयास स्वरूप यो नयाँ थालनी गरेकोछ । विशेषतः खर्चको प्राथमिकीकरण गर्ने सम्बन्धमा राजनैतिक तह र अन्य सरोकारवालाहरूबाट समर्थन प्राप्त गर्नु अझै चुनौतिको रूपमा रहेकोछ ।

५.२ मध्यकालीन खर्च व्यवस्था प्रक्रियाले नेपाली पक्षलाई मात्र होइन, दातृ समुदायलाई समेत महत्वपूर्ण प्रभाव पर्नेछ । यहाँ यसले अल्पकालमा वैदेशिक सहायतामा कस्तो असर पार्छ भन्ने विषयमा संक्षेपमा उल्लेख हुनु सान्दर्भिक हुनेछ । यसबारेमा विस्तृत चर्चा मध्यकालीन खर्च व्यवस्था सम्बन्धी दस्तावेजमा हुनेछ ।

(क) मध्यकालीन खर्च व्यवस्थाले दशौं योजना र अन्तरिम गरिबी निवारण रणनीतिपत्रले निर्धारण गरेको प्राथमिकताहरूलाई प्रतिबिम्बीत गर्नेछ । यदी वर्तमान विकास पद्धतिको दातृ पक्षबाट निर्देशित प्रबृत्तिको अन्त्य गर्ने हो भने दातृपक्षले यसमा निर्धारण गरिएका प्राथमिकताहरूको सम्मान र पालना गर्नु पर्ने हुन्छ । दृष्टिकोणमा आउने भिन्नताको समाधान गर्न आगामी दिनहरूमा दातृपक्ष र नेपाली पक्षका बीच सक्रिय एवं फलदायी संवाद भइरहनु पर्छ ।

(ख) मध्यकालीन खर्च व्यवस्थाको मुख्य सन्देश नेपालले साधन उपलब्धताको वास्तविकताको आधारमा देशको विकास प्रयासलाई सुदृढ (Consolidate) गर्नु आवश्यक छ भन्ने हो । यसको मतलब केही नयाँ आयोजना थप गर्न नसकिने होइन । अपितु अहिले आयोजनागत सहायतामा जोड दिनु उपयुक्त हुँदैन । आगामी वर्षमा साधनको स्थिति एवं कार्यान्वयन क्षमतामा सुधार आउने तथा चालू योजनाहरू सम्पन्न भइसकेपछि सरकारले निर्धारण गरेको राष्ट्रिय प्राथमिकताभित्र रहेर नयाँ आयोजनाहरू थप गर्ने सम्भव हुनेछ ।

(ग) मध्यकालीन खर्च प्रणाली र गरिबी निवारण रणनीतिपत्रको उद्देश्य अनुरूप राष्ट्रिय र क्षेत्रगत गरिबी निवारण गर्ने तथा आर्थिक वृद्धि हासिल गर्ने उद्देश्यमा प्रत्यक्ष प्रभाव पार्ने क्षेत्रगत क्रियाकलापहरूलाई जोड दिनु आवश्यक छ । क्षेत्रगत कार्यक्रमहरू संचालन गर्न डालो खर्च प्रणाली (Basket Funding Approach) लाई प्रोत्साहित गरिनेछ । तथापि कुनै दातृ विशेषले क्षेत्रगत प्राथमिकताको परिधिभित्र रहेर छुट्टै आयोजनामा सहयोग गर्न सक्नेछ ।

(घ) माथि उल्लेख भए अनुसार मध्यकालीन खर्च संरचना र गरिबी निवारण रणनीतिपत्रहरूले साधन उपयोगको परम्परागत परिपाटीमा जोड दिनुको सट्टा कार्यक्रमहरूका सेवाप्रदायी पक्ष, परिणाम र उपलब्धि पक्षमा बढी जोड दिएका छन् । नयाँ अवधारणाको मुख्य विशेषता नयाँ क्षेत्रमा लगानी गर्नु भन्दा विद्यमान आयोजना तथा कार्यक्रम संचालन र सम्भारमा यथेष्ट लगानीको प्रयोग गर्नमा रहेकोछ । यस किसिमको परिवर्तनलाई सहयोग पुऱ्याउन र चालू क्रियाकलापका

लागि भइरहेको खर्चको प्रयोगको प्रभावकारी अनुगमन गर्न नेपाल सरकारले हालै बजेट वर्गीकरणमा पनि परिवर्तन गरेकोछ । यो परिवर्तन अनुरूप संचालन र मर्मत जस्ता सालवसाली खर्चहरूमा पनि सहयोग गरेर दातृसमुदायले भइरहेको लगानीबाट अधिकतम फाइदा लिन र सेवा प्रदानमा प्रभावकारिता ल्याउन सघाउनेछ भन्ने अपेक्षा गरिएको छ ।

(ङ) यस अनुसार अल्पकालमा सहायताको संरचनामा महत्वपूर्ण परिवर्तन आउनु पर्ने हुन्छ । वर्तमान वित्त स्थितिमा सरकारले राजश्वको महत्वपूर्ण अंश साधारण र विशेष गरी घटाउन नसकिने खर्च पूरा गर्न प्रवाहित गर्नु पर्ने वाध्यता छ । यसले गर्दा विकासको लागि उपलब्ध हुने सरकारी साधनमा अझै कमी आउने हुन्छ । त्यसैले नेपालको लागि अहिलेको आवश्यकता भनेको नगद अनुदान र ऋणको रूपमा बजेट सहयोग र क्षेत्रगत कार्यक्रममा सहयोग प्राप्त गर्नु हो ।

(च) सरकार दाताले प्रदान गरेको सहयोग जुन प्रयोजनको लागि प्राप्त भएको हो सोमा खर्च नभई अन्यत्र खर्च हुन सक्ने चासोप्रति सचेत रहेको छ । वास्तवमा मध्यकालीन खर्च संरचनाको माध्यमबाट बजेट विनियोजन प्रक्रियामा सुधार गर्नुका साथसाथै सबै तहको खर्चको कार्यान्वयन र अनुगमनमा सुधार गर्नु पनि त्यति नै आवश्यक छ । आउँदा दिनहरूमा यस सम्बन्धमा दातृपक्षसँग परामर्श र सहयोग प्राप्त गरी सरकारले यस्तो विषयमा टुङ्गो लगाउनेछ । यो उद्देश्य हासिल गर्न माथि उल्लेख भए अनुसार बजेट वर्गीकरणमा सुधार र अन्तर्राष्ट्रिय दातृसंस्थाहरूको सहयोगमा राष्ट्रिय वित्तीय उत्तरदायित्व अध्ययन (Country Financial Accountability Assessment) पूरा गरिएको छ । यसका अतिरिक्त प्राविधिक सहयोगका कार्यक्रमहरूको सन्दर्भमा दातृपक्ष समेतको सहयोगमा सबै महत्वपूर्ण तहमा (जस्तैः- सम्बद्ध मन्त्रालय, जिल्ला र स्थानीय तहका इकाईहरू) कार्यान्वयन, अनुगमन र उत्तरदायित्वका पक्षमा सुदृढ गर्नु आवश्यक छ ।

## ६. सहायताका दीर्घकालीन प्राथमिकताहरू

६.१ मानवीय, आर्थिक र अन्य साधनको सीमितताको कारण नेपाली असीमित संख्यामा लगानीलाई धान्न सक्दैन । यसकारण नेपालीले लगानी सम्बन्धी नीतिगत निर्णय गर्दा सावधानी अपनाउनु आवश्यक छ । यस सन्दर्भमा वैदेशिक सहायता सम्बन्धी दीर्घकालिन नीतिका मार्गदर्शनहरू अल्पकालिन नीतिभन्दा खासै फरक हुने देखिंदैन ।

६.२ वैदेशिक सहायता सरकारले निर्धारण गरेका राष्ट्रिय प्राथमिकताका क्षेत्र तथा उपक्षेत्रहरूमा प्रवाहित हुनु आवश्यक छ । यी क्षेत्रहरू मुख्यतया देहाय बमोजिम छन्:- पूर्वाधार विकास (ऊर्जा, यातायात, पर्यटन, विज्ञान र प्रविधि), कृषि, सिंचाई, वन र वातावरण, मानवीय साधन र सामाजिक विकास, शिक्षा, स्वास्थ्य र जनसंख्या र गरिबी निवारणमा केन्द्रित विशेष गतिविधिहरू जस्तैः- रोजगार प्रबर्द्धन तथा पिछडिएको क्षेत्रको विकास आदि । यी व्यापक क्षेत्र र विषय अन्तर्गत खासगरी ग्रामीण पूर्वाधार विकास, जस्तैः- ग्रामीण विद्युतीकरण, ग्रामीण सडक र यातायात, लघु, सिंचाई, कृषि प्रसार र बाली विविधिकरण, आधारभूत र प्राथमिक शिक्षा जनस्वास्थ्य, खानेपानी र जनसंख्या समस्याको समाधान आदिमा बढी जोड दिनु पर्ने आवश्यकता छ । विशेषतः गरिबी निवारण र आर्थिक वृद्धिको उद्देश्य हासिल गर्न तथा क्षमता अभिवृद्धि गर्न वैदेशिक सहायता यी क्षेत्र तथा उपक्षेत्रहरूमा प्रवाहित गर्नु आवश्यक छ ।

६.३ वैदेशिक सहायताको प्रवाह तुलनात्मक हिसाबले उच्च आर्थिक र सामाजिक प्रतिफल दिने प्राथमिकता प्राप्त क्षेत्र तथा उपेक्षा गरिनु पनि आवश्यक छ । यसैगरी वैदेशिक सहायताको प्रवाहलाई आर्थिक सुधार कार्यक्रमको कार्यान्वयनसँग तालमेल मिल्ने गरी त्यस्ता सुधार कार्यक्रमलाई थप बल पुग्ने गरी परिचालित गरिनु पर्छ । प्राथमिकता प्राप्त आयोजनाहरूको छनौट पूर्वनिर्धारित वस्तुगत प्रक्रियाका आधारमा गरिनेछ ।

६.४ स्वाभाविक रूपले प्राथमिकता प्राप्त क्षेत्रहरू तीसँग सम्बन्धित विषयहरूका सन्दर्भमा एक आपसमा गाँसिएका हुन्छन् । प्राथमिकता प्राप्त क्षेत्र तथा उपक्षेत्रको लागि प्राप्त सहयोगबाट अधिकतम फाइदा लिन सहायताको पहिचान गर्दा एउटा क्षेत्र तथा उपक्षेत्रमा भएको उपलब्धिले अर्को क्षेत्र तथा उपक्षेत्रमा पार्न सक्ने प्रभावलाई (Spill-over Efffects) ध्यानमा राखिनेछ, जसले गर्दा एक क्षेत्रमा प्राप्त सहयोगले अर्को क्षेत्र, उपक्षेत्रलाई समेत फाइदा पुगोस् । वैदेशिक सहायताको समुचित प्रयोगको लागि नीतिगत हिसाबले आयोजना तथा कार्यक्रमहरू बीच परिपूरक तथा अन्तरसम्बन्ध सुनिश्चित गर्ने र त्यस्ता सहकार्यबाट हुन सक्ने अधिकतम फाइदा प्राप्त गर्न सकियोस् भन्ने तर्फ ध्यान दिनु आवश्यक हुन्छ । अहिलेको विद्यमान स्थितिमा अधिकांशतः वैदेशिक सहायता आयोजना विशेष तथा कार्यक्रम विशेषमा केन्द्रीत भई खण्डीकृत रूपमा प्रवाहित भएको छ । यस समस्याको निराकरणको लागि वैदेशिक सहायतालाई समुच्चा र एकीकृत अवधारणा अनुसार प्रवाहित गर्ने नीति लिइनेछ । यसका लागि गरिबी निवारणमा असर गर्ने लैङ्गिक विषय, वातावरण र प्रशासकीय सुधारजस्ता सबै क्षेत्रमा सान्दर्भिक (Cross-cutting) हुने विषयहरूलाई ध्यानमा राखेर आयोजना तथा कार्यक्रम तर्जुमा गरिनेछन् ।

तर सरकारले यस्ता मुद्दाहरूमा छुट्टै आयोजनाहरू बनाउन प्रोत्साहित गर्नेछैन । तथापि लैङ्गिक विषय, वातावरण र शासकीय सुधारका क्षेत्रमा लक्षित क्षेत्र एवं समूहका लागि विशेष किसिमका कार्यक्रमहरू भने संचालनमा आउन सक्नेछन् । यी विषयहरूलाई वैदेशिक सहायताबाट हुने लगानीको मुख्य सम्भेगको रूपमा लिनुको सट्टा प्राथमिकता प्राप्त आयोजनाको अभिन्न अंगको रूपमा लिइनेछ । वैदेशिक सहायता नीतिको महत्वपूर्ण ध्येय वैदेशिक सहायता परिचालन गर्दा विकासका विविध पक्षहरूका बीच अन्तरसम्बन्ध पहिल्याउनु हुनेछ ।

६.५ क्षेत्रगत संरचनाभित्र रहेर प्राथमिकता प्राप्त क्षेत्रमा "विकास लगानी" को आवश्यकतालाई पूरा गर्ने मात्र होइन, विद्यमान संरचनाबाट अधिकतम फाइदा लिन सालबसाली खर्चको आवश्यकतालाई समेत ध्यान दिने गरी वैदेशिक सहायता प्रवाहित गर्ने प्रयासहरू गरिनेछन् । दातृपक्षलाई क्षेत्रगत आवश्यकतातर्फ सहायता प्रवाहित गर्न प्रोत्साहित गरिनेछ भने सरकारले सालवासाली संचालन खर्च व्यहोर्नेछ । माथि उल्लेख भए अनुसार प्रत्येक प्राथमिकता प्राप्त क्षेत्रमा मुख्य आयोजना तथा विकास गतिविधिहरू पहिचान गरी र तिनलाई क्षेत्रगत प्राथमिकता क्रममा राखी तिनको सावधानिपूर्वक मूल्यांकन गरिनेछ । जसले गर्दा दाताहरूले निर्धारित क्षेत्रमा आयोजनाहरूको छनौट गर्न सकून् ।

७. **प्रमुख नीतिहरू**

माथि उल्लिखित उद्देश्यहरू हासिल गर्न देहाय बमोजिमका नीतिहरूको अवलम्बन गरिनेछः-

७.१ **सहुलियतपूर्ण ऋणः** वैदेशिक ऋण सहायताको प्रयोग आयोजना तथा कार्यक्रमहरूको उद्देश्य, विषवस्तु र लाभहरूको परीक्षण गरेपछि मात्र छनौटपूर्ण तरिकाले गरिनेछ, जसबाट कम वाह्य ऋणको बोझमा आर्थिक वृद्धिदरलाई द्रुततर बनाई आर्थिक, सामाजिक उद्देश्यहरू हासिल गर्न सकियोस । नेपाल अन्तर्राष्ट्रिय दातृसंस्थाहरूसँग गहिरो साझेदारी विकास गरी सामाजिक तथा आर्थिक विकासमा ती दातृसंस्थाहरूबाट प्राप्त हुने ऋण सहायताको योगदानका प्रभावहरूको संयुक्त रूपमा मूल्यांकन गर्नेछ । यस सम्बन्धमा अवलम्बन गरिने उपायहरू देहाय बमोजिम हुनेछन्ः-

(क) उच्च प्रतिफल प्राप्त हुने आयोजना र पूर्वाधार विकासमा वैदेशिक ऋण उपयोग गरिनेछ ।

(ख) प्रत्येक नयाँ ऋण स्वीकार गर्नु भन्दा पहिले यसको विविध प्रभावबारे विश्लेषण गरिनेछ ।

(ग) निजी क्षेत्रका आर्थिक गतिविधिहरूलाई सघाउ पुऱ्याउन, विदेशी मुद्रा आर्जनमा सघाउ पुऱ्याउने तथा वाह्य कारोबारको प्रबर्द्धनमा योगदान दिने क्षेत्रहरूमा ऋण लगानी केन्द्रित गरिनेछ ।

(घ) वैदेशिक ऋण प्राप्त गर्दा विनियमदरको उतार चढावका कारण नेपाल सरकारको ऋण दायित्वमा पर्ने नकारात्मक प्रभावबाट बच्ने सम्भावनाहरू खोजिने छन् ।

(ङ) सरकारको ऋणभारलाई कम गर्न कुनै पनि ऋण सहयोगको रकम अध्ययन तथा अध्ययन भ्रमणमा खर्च गर्न रोक लगाइनेछ ।

(च) ऋण सहयोगको रकमबाट परामर्शदाता तथा विदेशी विशेषज्ञहरूको सेवामा हुने खर्चलाई कम गरिनेछ ।

(छ) कुनै पनि व्यापारिक तथा आपूर्तिकर्ताको ऋण लिने छैन । तर यसले मिश्रित ऋण लिने विषयलाई रोक्ने छैन ।

(ज) सरकारी स्वामित्वको संस्था तथा अन्य संस्थाहरूलाई ऋण उपलब्ध गराउन नेपाल सरकारजमानत बस्नेछैन ।

७.२ **अनुदान सहयोगः-** अनुदान सहायताले भविष्यका सन्ततिलाई दायित्व नपर्ने र सरकारको विद्यमान संकुचित वित्तीय ढाँचामा थप बाधा नपुऱ्याउने भएकोले नेपालले यस प्रकारको सहायतालाई बढी प्रोत्साहित गर्नु पर्ने आवश्यकता छ । त्यसैले पहिले अनुदान सहायता प्राप्त गर्नेतर्फ जोड दिने र सो प्राप्त नहुने स्थितिमा मात्र सहुलियतपूर्ण ऋण लिने नीति अवलम्बन गरिनेछ । सम्भव भएसम्म अनुदानसहितको सहुलियतपूर्ण ऋण लिन सहयोग पुग्ने किसिमको व्यवस्था गर्न जोड दिइनेछ । नेपालजस्तो अति कम विकसित देशमा धेरै आयोजना र कार्यक्रमहरूका लागि सहुलितपूर्ण ऋणभन्दा अनुदान सहायता बढी उपयुक्त हुन्छ । आयोजना तर्जुमा, संस्थागत क्षमता, वृद्धि, प्राविधिक पृष्ठाधार (Technical Backstopping), आयोजनाको अनुगमन र पुनरावलोकनका लागि लिइने प्राविधिक सहायता सहुलियतपूर्ण ऋण अन्तर्गत लिनुभन्दा अनुदानमा लिनु बढी उपयोगी हुने देखिन्छ । आयोजनाको शिरोभार खर्च र प्राविधिक सहयोगको लागि अनुदानबाट व्यहोर्ने सहवित्तियकरण व्यवस्था (Co-financing) गर्नेतर्फ जोड दिइनेछ ।

७.३ **बजेट सहायताः-** छोटो समयको जस्तै लामो समयको लागि पनि कार्यक्रम सहायता (आयोजनागत सहयोगको तुलनामा) आवश्यक पर्ने हुन्छ । यस्तो सहायताको खोजी

क्षेत्रगत अथवा वृहत् आर्थिक कार्यक्रम लगायत उपयुक्त परिस्थितिमा बजेट सहायताको सन्दर्भमा पनि हुनेछ ।

७.४ **प्राविधिक सहायताः-** प्राविधिक सहायताले नेपालको विकास प्रक्रियामा दिगो योगदान पुऱ्याउन सक्नु पर्छ । स्थानीय जनशक्तिको उचित उपयोग, विशेषज्ञता तथा प्रविधिको हस्तान्तरण र प्राविधिक सहायताको उपयुक्त एवं छनौटपूर्ण उपयोगका माध्यमबाट आन्तरिक संस्थागत क्षमता अभिवृद्धि गरी प्राविधिक सहायता तथा विदेशी सल्लाहकार माथिको निर्भरता घटाईनेछ । प्राविधिक सहायता मुख्यतः ठूला आयोजनाहरूको कार्यान्वयनमा सहयोग पुऱ्याउन, कुनै निश्चित आर्थिक, सामाजिक क्षेत्रमा सुधार गर्न तथा देशको रणनीतिक दिशा निर्देश गर्ने कार्य जस्तै- केन्द्रीय तथा स्थानीय तहका निकायहरूको विकास गतिविधिहरूको तर्जुमा, कार्यान्वयन एवं मूल्यांकन क्षमता अभिवृद्धि गर्ने जस्ता विषयमा केन्द्रीत गरिनेछ । अन्य क्षेत्रमा समेत प्राविधिक सहायता स्वीकार गर्दा छनौटपूर्ण प्रक्रिया अपनाइनेछ । प्राविधिक सहयोगका लागि ऋण लिन निरुत्साहित गरिनेछ ।

७.५ **मुख्यतया प्राविधिक सहायता दुई प्रकारका छन् -** आयोजना विशेषसंग सम्बद्ध नभएको श्रृण सहायता (Free Standing Technical Assistance) र आयोजनासंग सम्बन्धित प्राविधिक सहायता (Project Realeted Techinical Assistance) साधारणतया पहिलो प्रकारको प्राविधिक सहयोगमा कतिपय दाताहरूले स्थानीय प्राविधिकहरूलाई बढावा दिएका छन्  स्थानीय दक्ष एवं विशेषज्ञहरूको उपयोगमा स्रोतको परिचालन हुँदा देशको लागि वित्तीय सहयोग प्राप्त हुनुका अतिरिक्त स्थानीय संस्थाहरू र विशेषज्ञहरूको क्षमता अभिवृद्धि पनि हुन्छ । यो प्रक्रियालाई अरू अगाडि बढाउनु पर्छ । त्यसैले दाताहरूलाई आयोजना विशेषसँग सम्बन्धित नभएको प्राविधिक सहायतामा सम्भव भएसम्म स्थानीय संस्था र प्राविधिक दक्षताको उपयोग गरी तिनको क्षमता अभिवृद्धि गर्न प्रोत्साहित गरिनेछ ।

७.६ आयोजनागत प्राविधिक सहायताका सम्बन्धमा सरकारले स्पष्ट रूपमा आयोजना डिजाइनको अवस्थादेखि नै स्थानीय दक्ष परामर्शदाताहरूको सीप प्रयोग गर्न दातृपक्षलाई प्रोत्साहित गर्ने नीति लिइनेछ । यसबाट स्थानीय तहको क्षमता अभिवृद्धि हुनुको साथै स्थानीय आवश्यकता तथा परिस्थिति र क्षमतालाई ध्यानमा राख्दै उपयुक्त प्रकारका दीर्घकालसम्म दिगो हुने प्रविधिको छनौट भई आयोजना तथा कार्यक्रमहरूको गुणस्तर वृद्धिमा योगदान पुग्न जान्छ । यसलाई दातृ पक्षले विकास प्रक्रियालाई गुणस्तरयुक्त

बनाउने र उपयुक्त प्रविधि र जनशक्तिको प्रयोगद्वारा बढी लागत प्रभावी र उच्च उत्पादन दिने खालको दिगो लगानी सुनिश्चित गर्ने सरकारी प्रयासको रूपमा लिनु पर्दछ ।

७.७ प्राविधिक सहायताका अरू दुई पक्षबारे पनि विचार गरिनु पर्छ । नेपालले ठूलो संख्यामा स्वयंसेवकहरूको सेवा प्राप्त गरेकोछ र देशको विकासका लागि तिनीहरूको योगदान प्रशंसनीय छ । तर स्वयंसेवकहरूको संलग्नतालाई बढी उपयुक्त र गुणस्तरयुक्त बनाउन अरू प्रयास हुनु आवश्यक छ । सरकारले स्वयंसेवक सेवा आवश्यक पर्ने र उनीहरूले बढी योगदान दिन सक्ने विशेष क्षेत्रहरूको पहिचान गर्नेछ । त्यसका आधारमा त्यस्ता क्षेत्रहरूमा स्वयंसेवकहरूको नियुक्ति गर्न दातृपक्षसँग अनुरोध गर्ने व्यवस्था गरिनेछ । प्राविधिक सहायताको अर्को पक्ष विकासशील देशहरूबीच प्राविधिक सहायता (Technical Cooperation between Developing Countries) हो । नेपाल सरकारको सहायताको प्रचलन बढाउन तथा विस्तार गर्न प्रोत्साहन गर्ने र यस्तो प्राविधिक सहायता बढीभन्दा बढी क्षेत्रीय संस्थाहरूमार्फत हुने अपेक्षा गरेकोछ । दातृपक्षहरूलाई क्षेत्रीय प्राविधिक स्रोत उपयोग गर्न र प्राविधिक सहयोग विशेष गरी यही क्षेत्रको तेस्रो देशबाट उपलब्ध गराउन प्रोत्साहित गरिनेछ ।

७.८ **राजश्व परिचालन-** नेपालजस्तो कम आम्दानी भएको देशको लागि बढी राजश्व परिचालन गर्ने अवसरहरू सीमित हुन्छन् । यस सन्दर्भमा वैदेशिक सहायताले विकासका उद्देश्य हासिल गर्न आवश्यक साधन उपलब्ध गराई महत्वपूर्ण योगदान पुऱ्याउन सक्छ । यसले सरकारी राजश्वको अभावलाई सोझै पूर्ति गर्न सक्दछ । यसका साथै विभिन्न तरिकाले अप्रत्यक्ष रूपमा राजश्व बृद्धिमा समेत सहयोग पुऱ्याउँछ । जस्तै- (क) प्राविधिक सहायताले कर प्रशासनको क्षमता अभिवृद्धि गर्न सहयोग पुऱ्याउँछ । (ख) वैदेशिक सहयोगको उपयोगद्वारा द्रूततर आर्थिक वृद्धि भई कराधार (Revenue Base) बढाउन मद्दत पुग्दछ । यसका लागि अल्पकालीन र मध्यकालीन रूपमा आर्थिक बृद्धिलाई बढाउने खालको आयोजना छनौट गर्ने नीति लिइनेछ । आयोजनाको छनौट निर्धारण गर्ने नीतिको यो महत्वपूर्ण पक्ष हुनेछ । (ग) वैदेशिक सहायता प्रत्यक्ष रूपमा सरकारको राजश्व बढाउने क्षेत्रका आयोजनाहरूमा उपयोग गर्न सकिन्छ । यसैले वैदेशिक सहायताको उपयोग गर्दा कूल गार्हस्थ उत्पादन र रोजगारीको वृद्धि एवं उच्च आर्थिक बृद्धिदरको प्राप्तिद्वारा आन्तरिक राजश्व परिचालनमा सुधार ल्याउन सघाउने आयोजनाहरूलाई बढी जोड दिइनेछ ।

७.९ **पूँजी सञ्चितिको अल्प उपयोग-** नेपालको सार्वजनिक क्षेत्रमा भएका लगानी कार्यहरूले वाञ्छित प्रतिफल दिन र राजश्व उपलब्ध गराउन सकेका छैनन् । वित्तीय साधनको अभाव, कमजोर व्यवस्थापन, मर्मत सम्भारमा ढिलाई? अनुपयुक्त लगानीजस्ता धेरै कारणहरूले गर्दा सरकारी क्षेत्रको स्वामित्वमा रहेको पूँजीको अल्प उपयोग भएको छ । साधारण सालवसाली संचालन खर्च बाहेक महत्वपूर्ण साधन, आपूर्ति र अरू सम्बन्धित चालू खर्च व्यहोरेर देशको पूँजी सञ्चितिको प्रयोगमा दक्षता वृद्धि गर्न वैदेशिक सहायताले महत्वपूर्ण विन्दुहरूमा सानै स्तरको हस्तक्षेपले पनि तत्काल फाइदा प्राप्त गर्न सकिने हुन्छ । विद्यमान सञ्चित पूँजीको दक्षता वृद्धि गर्न र त्यसको उपयुक्त उपयोग गर्न वैदेशिक सहायता लिइनेछ । यस प्रकारको कार्यक्रम तथा वस्तुगत सहायतालाई प्रबर्द्धन गर्ने विषय वैदेशिक सहायता नीतिको महत्वपूर्ण पक्ष हुन सक्छ ।

७.१० **राष्ट्रिय क्षमता वृद्धि र साझेदारीको निर्माण गर्ने-** आयोजना व्यवस्थापनमा नेपालीहरूको नेतृत्व बढाउन प्रोत्साहित गरेर राष्ट्रिय क्षमताको सुदृढीकरण गर्न वैदेशिक सहायताको परिचालन हुनु आवश्यक छ । सम्बद्ध मन्त्रालयहरूका योजना इकाईहरूलाई सुदृढ गर्ने विषयमा विशेष जोड दिइनेछ । प्रभावकारी संचार संजालको स्थापनाद्वारा सम्बद्ध पक्षहरूका बीच समन्वय गर्ने प्रक्रियालाई सुदृढ गरिनेछ । सरकार, निजी क्षेत्र, नागरिक समाज (मुख्यतः स्थानीय गैरसरकारी संस्थाहरू र समुदायमा आधारित संस्थाहरू) एवं दातृ पक्षबीच साझेदारी बढाई आन्तरिक वैदेशिक सहायता व्यवस्थापनको क्षमता सुदृढ गरिनेछ । आयोजना तर्जुमा र कार्यान्वयनको प्रत्येक चरणमा सरोकारवालाहरूबीच प्रभावकारी साझेदारी निर्माण गर्नाले आयोजनाबाट अधिकतम फाइदा लिन, तिनको दिगोपना हासिल गर्न, भ्रष्टाचार नियन्त्रण गर्न र शासकीय व्यवस्थामा सुधार गर्न सहयोग पुग्नेछ । यसका अतिरिक्त सरकारी क्षेत्र र निजी क्षेत्रबीचको साझेदारीले निजी क्षेत्रको विकास र अन्ततोगत्वा विकासका कार्यहरूलाई व्यवस्थापन गर्ने राष्ट्रिय क्षमता बढाउन समेत सहयोग पुग्दछ ।

७.११ **अन्तर्राष्ट्रिय गैरसरकारी संस्थासम्बन्धी व्यवस्था-** अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरू देशका महत्वपूर्ण विकास सहयात्री हुन् । तिनीहरूसँग भएको विभिन्न ठाउँको अनुभव र दक्षतालाई नेपाल सरकारको विकास कार्यक्रममा खासगरी ग्रामीण र दुर्गम क्षेत्रमा प्रयोग गर्न सकिन्छ । यस्ता संस्थाहरूले अरू देशका साधारण जनता, निजी क्षेत्र र विभिन्न प्रतिष्ठानहरूबाट नेपालमा विभिन्न किसिमको स्रोत र दक्षता ल्याउँछन् । तिनीहरूले द्विपक्षीय बहुपक्षीय र अरू आधिकारिक विकासका स्रोतहरूको पनि उपयोग गर्छन् । यसका अतिरिक्त अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूले नेपाल र नेपालको विकासका बारेमा

अरू देशमा सकारात्मक धारणाको प्रचार गर्न महत्वपूर्ण भूमिका निर्वाह गरेका हुन्छन् । तिनीहरूसँग विभिन्न तुलनात्मक लाभहरू पनि छन् । तथापि, नेपालमा कार्य गर्नेहरू ठूलो संख्यामा र विभिन्न किसिमका भएको कारण तिनका गतिविधिहरूको प्रभावकारी अनुगमन र अवलोकन हुनु पर्ने विषय पनि त्यत्तिकै महत्वपूर्ण छ । सरकारलाई अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूमार्फत नेपालमा प्राप्त हुने रकम, त्यसको स्रोत र त्यसको उपयोग सम्बन्धी जानकारी राख्ने अधिकार छ । यो पारदर्शिता क्षेत्रगत गतिविधि र कार्यक्रमहरूको योजना तर्जुमाका लागि समेत महत्वपूर्ण छ । अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूद्वारा प्रवाहित वैदेशिक सहायताको अनुगमन तथा मूल्यांकन गर्ने र त्यस्तो सहायताको उपयोगबारे सेवाग्राही जनता र नेपाल सरकारको लागि अरू पारदर्शी बनाइनेछ । यसका लागि देहायका उपायहरू अवलम्बन गरिनेछः-

(क) अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूको दर्ता, नवीकरण र सुविधा उपयोग गर्ने सन्दर्भमा प्रशासनिक प्रक्रियामा सरलीकरण गरिनेछ ।

(ख) समाज कल्याण परिषद्लाई अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरू परिचालनको लागि छाता संगठनको रूपमा विकास गरी अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूको दर्ता र अरू प्रशासनिक टेवा त्यहाँबाट नै प्रदान गरिनेछ ।

(ग) अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूले क्रियाकलापहरूको समन्वय र अनुगमन गर्न समाज कल्याण परिषद्को क्षमता सुदृढीकरण गरिनेछ ।

(घ) सबै अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूले परिषद्मा दर्ता गर्नु पर्ने व्यवस्था सुनिश्चित गर्ने । अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरू दर्ता गर्ने ढाँचा अनुकूल सम्बन्धित निकायहरूसँग आयोजना सम्झौता हुने व्यवस्था मिलाइनेछ ।

(ङ) अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूले सम्भव भएसम्म स्थानीय स्वायत्त शासन ऐन अनुकूल स्थानीय निकायहरू तथा सम्बद्ध पक्षहरूसँग सम्बन्ध स्थापना गर्ने व्यवस्था मिलाइनेछ ।

(च) अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूलाई कर सम्बन्धी प्रचलित कानुन तथा लेखापरीक्षण व्यवस्थाको पालना गर्न वाध्य गराइनेछ ।

(छ) अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूमा स्थानीय जनशक्ति तथा साधनको अधिकतम प्रयोग सुनिश्चित गरिनेछ ।

(ज) गैरसरकारी संस्थाहरूद्वारा संचालित कार्यक्रमहरूको लागि नेपालमा उपलब्ध हुने द्विपक्षीय सहायता रकम ती स्थानीय गैरसरकारी संस्थाहरू र स्थानीय सामुदायिक संस्थाहरूलाई नै उपलब्ध गराउने व्यवस्था सुनिश्चित गरिनेछ।

(झ) खुला विकास सहायता प्रतिस्पर्धा प्रक्रियामा स्थानीय गैरसरकारी संस्थाहरूको सहभागिता बढाउने प्रयत्न गर्नुको साथै अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरू र स्थानीय गैरसरकारी संस्थाहरूको साझेदारीको विकास गरिनेछ।

(ञ) लागत साझेदारी र एक अर्काको गतिविधिको आडमा आ-आफ्ना गतिविधिहरू संचालन गर्न प्रोत्साहित गरिनेछ।

(ट) अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूलाई सिधै कार्यक्रम संचालन गर्न दिनुभन्दा स्थानीय निकाय वा स्थानीय गैरसरकारी संस्थाहरूसँगको साझेदारीमा कार्यक्रम संचालन गर्न जोड दिइनेछ।

(ठ) अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूले तिनीहरूको कार्यक्रम संचालन गर्न स्थानीय गैससलाई साझेदार छान्नु पर्दा पारदर्शी र निश्चित आधारहरू अपनाई स्थानीय गैससहरूसँग समान व्यवहार गर्नु पर्नेछ।

(ड) अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरूलाई ग्रामीण र दुर्गम क्षेत्रमा आफ्ना कार्यक्रमहरू संचालन गर्न प्रोत्साहित गरिनेछ।

७.१२ **नेपाल सरकारको नेतृत्व र स्वामित्व सुनिश्चित गर्ने-** वैदेशिक सहायताको प्रभावकारीता अभिवृद्धि गर्नका लागि विकास कार्यक्रमहरूमा नेपाल सरकारर लाभग्राही जनताको स्वामित्व सुनिश्चित गर्ने व्यवस्था गरिनेछ। यस सन्दर्भमा विकास प्रक्रियामा दातृपक्षको भूमिका सहजकर्ता र सहयोगीको रूपमा विकसित गरिनेछ। यसका लागि देहायका उपायहरूको अवलम्बन गरिनेछ-

(क) योजना तर्जुमा र कार्यान्वयन गर्ने जिम्मेवारी राष्ट्रिय तहमा हस्तान्तरण गर्ने।

(ख) नेपाल सरकारको आफ्नै स्रोतमा पूर्ण रूपले संचालित आयोजनाहरू र वैदेशिक सहायतामा आधारित आयोजनाहरूमा बजेट, स्वामित्व तथा कार्यान्वयन लगायत खर्च प्रतिवेदन र उत्तरदायित्वका सम्बन्धमा समान व्यवहार गर्ने।

(ग) अलग्गै आयोजना कार्यान्वयन इकाई वा विकास समितिहरू मार्फत आयोजना संचालन गर्ने कार्यलाई दुरुत्साहित गरी आयोजना कार्यान्वयनमा एकरूपता ल्याउने।

(घ) राष्ट्रिय स्वामित्व अभिवृद्धिमा सहयोग पुऱ्याउन दातृपक्षलाई प्रोत्साहित गर्ने, र

(ङ) विकेन्द्रित योजना तथा कार्यान्वयन प्रणालीलाई विस्तार गर्ने सुदृढ तुल्याउने ।

विकास प्रक्रियाको स्वामित्व अभिवृद्धि गरी तथा आयोजनाको उचित सम्भार र संचालन गरी दिगो विकास सुनिश्चित गरिनेछ । यसबाट भ्रष्टाचार नियन्त्रण गर्न, क्षमता अभिवृद्धि गर्न र शासकीय व्यवस्थामा सुदृढीकरण गर्न सहयोग पुग्नेछ ।

७.१३ **निजी क्षेत्र-** विगत दशकमा राष्ट्रिय अर्थतन्त्रमा निजी क्षेत्रको भूमिकामा महत्वपूर्ण परिवर्तन आएको देखिएको छ । अहिले निजी क्षेत्रले आर्थिक बृद्धिलाई बढाउन नेतृत्वदायी भूमिका निर्वाह गरेको छ । वैदेशिक सहायताले धैरै हदसम्म सार्वजनिक क्षेत्रलाई सहयोग गरेको छ । तर वैदेशिक सहायताबाट संचालित आयोजना तथा कार्यक्रमको निर्माण र कार्यान्वयनमा निजी क्षेत्रको संलग्नतालाई अलग गर्न भने हुँदैन । विशेषतः पूँजीगत सहायताबाट संचालित आयोजनाहरूमा परामर्श सेवा र करारद्वारा प्रविधिको छनौटमा निजी क्षेत्रले वृहत् र विस्तारित भूमिका खेल्न सक्छ । आर्थिक उदारीकरणको प्रारूप र भावना अनुरूप निजी क्षेत्रको विकासको लागि महत्वपूर्ण औजारको रूपमा वैदेशिक सहायताको प्रयोग गरिनेछ । निजी क्षेत्रको दिगो विकास र आन्तरिक तथा वाह्य लगानीको प्रबर्द्धनको विपरित हुने वैदेशिक सहायतालाई प्रोत्साहित गरिने छैन । निजी क्षेत्रलाई पनि छानिएका पूँजीगत सहायतामा संचालित आयोजना वैदेशिक स्रोत जुटाएर सहलगानी गर्ने र वैदेशिक सहायताको माध्यमबाट संचालन हुन लागेको पूर्वाधार निर्माण सम्बन्धी गतिविधिहरूमा परिपूरक लगानी प्रवाह गर्ने कार्यमा संचालन गराइनेछ । आयोजना तथा कार्यक्रममा सुरुवातका अवस्थादेखि नै निजी क्षेत्रलाई समावेश हुन प्रोत्साहन गरिनेछ, जसले लगानीका परिपूरक अवसरहरूको खोज गर्न सकियोस् । निजी क्षेत्रलाई लगानी गर्न प्राथमिकता दिनेतर्फ यस नीतिको जोड रहनेछ । निजी क्षेत्रको लगानीको विकल्प नरहेमा मात्र नेपाल सरकारले लगानीको लागि अग्रसरता लिइनेछ । वैदेशिक सहायता सम्बन्धी क्रियाकलापमा निजी क्षेत्रलाई गहन रूपमा संलग्न गराउन सरकारले निजी क्षेत्रको विशेष र सम्भाव्य भूमिका निर्धारण गर्नेछ ।

७.१४ **नागरिक समाजको भूमिका-** नेपालको विकास प्रक्रियामा नागरिक समाजका संस्थाहरू महत्वपूर्ण साझेदार हुन् । तिनीहरूले वैदेशिक सहायता संचालनका विभिन्न तहमा अन्तरक्रिया र अन्तरसम्बन्ध गर्दछन् । नेपाल सरकारद्विपक्षीय तथा बहुपक्षीय सहायताका अतिरिक्त नागरिक समाजका संस्थाहरू मार्फत पारदर्शी तबरले प्रवाहित हुने सहायता राशि महत्वपूर्ण र उल्लेखनीय स्रोतको रूपमा रहेको तथ्यप्रति अनभिज्ञ छैन । तिनीहरूले

नेपाली जनता, सरकार र दातृपक्षबीचमा वैदेशिक सहायताका विविध पक्ष ( उदाहरणको लागि वातावरण) मा मध्यस्थकर्ताको भूमिका निर्वाह गर्छन् । तिनीहरू वैदेशिक सहायता गतिविधिका विविध क्षेत्र, खासगरी ग्रामीण क्षेत्रमा साझेदारको रूपमा रहेका छन् । नेपालमा धेरै ठूलो संख्यामा सामुदायिक संस्थाहरू वैदेशिक सहायताको संरचनाभित्रका विविध पक्षहरूमा संलग्न भएका छन् । तिनीहरूले नेपालमा वैदेशिक सहायतामा संचालित आयोजना तथा कार्यक्रमहरू बीच स्थानीय स्तरको साझेदारी विकास गरेका छन् । सामाजिक परिचालन र नागरिक समाजको संलग्नतालाई बढाउन संयुक्त राष्ट्र संघीय गैरसरकारी संस्थाहरूले स्थानीय गैरसरकारी संस्थाहरू र सामुदायिक संस्थाहरूसँग बहुमुखी सम्बन्ध स्थापित गरेका छन्, यद्यपि यसमा अझै सुधार चाहिएको छ । सरकार वैदेशिक सहायतामा संचालित आयोजनाको तर्जुमादेखि कार्यान्वयनसम्मका प्रक्रियाहरूमा स्थानीय गैरसरकारी संस्थाहरूको संलग्नतालाई अझ व्यापक गर्ने अपेक्षा गर्दछ । सूचनाको आदान प्रदान एवं पारदर्शिताको अभिवृद्धि गरी तिनीहरूको विचारलाई प्रोत्साहित गरिनेछ । तिनीहरूलाई विकासका प्राथमिकता, अवसरहरू र वैदेशिक सहायताले तिनीहरूको समुदायमा पार्न सक्ने असरको बारेमा आफ्ना विचारहरू व्यक्त गर्न आवश्यक सहयोग प्रदान गरिनेछ ।

७.१५ **अन्तर्राष्ट्रि नीति परिवेश-** नेपालमा दातृपक्षका नीति तथा अभ्यासहरू केही हद्सम्म बहुराष्ट्रिय तथा अन्तर्राष्ट्रिय मञ्चबाट पारित सुझाव, निर्देशन र निर्णयहरूसँग प्रभावित छन् । विकास वार्ताहरूको दिशा र गुणस्तरमा धेरै महत्वपूर्ण सुधारहरू भइसकेता पनि यस्ता मञ्चहरूमा विकासोन्मूख र खासगरी अति कम विकसित देशहरूको सोच र अनुभवहरूले बलियो प्रभाव पार्न सकेका छैनन् । नेपालजस्ता अति कम विकसित देशहरूमा विकसित दातृ राष्ट्र र तिनको नेतृत्वमा रहेका दातृसंस्थाको जस्तो क्षमताको अभाव छ । तथापि नेपालले विकास सहयोग सम्बन्धमा संगालेका अनुभवका आधारमा अन्तर्राष्ट्रिय बहसमा महत्वपूर्ण र निर्णायक योगदान नपुऱ्याउने अवसरलाई उपयोग गर्नेछ । नेपालको योगदान प्रभावकारी र उपयुक्त हुन नेपालले प्रस्तुत गर्ने विचार देशमा भएको विकासको सफलता र असफलताका अनुभवहरूको वस्तुगत विश्लेषणमा आधारित हुनु पर्ने हुन्छ । वैदेशिक सहायता सम्बन्धी नीतिले यस विषयलाई अवदेखि जोड दिंदै जानेछ । स्थानीय विज्ञहरू र संस्थाहरूलाई नेपालको अनुभवको मूल्यांकन गर्न र उनीहरूका विचारहरू निर्माण गर्न सक्रिय भूमिका निर्वाह गर्न सक्षम बनाइनेछ । यस्ता विचारहरू बहुराष्ट्रिय बहसमा सुझावको रूपमा उपलब्ध गराउन सकिनेछ ।

७.१६ **दातृ समुदायबाट विशेष सहयोग प्राप्त गर्नु पर्ने विषयहरू-** नेपाल सरकारनेपालको विकासका उद्देश्यहरू हासिल गर्न दातृपक्षहरूबाट बलियो र भरपर्दो सहयोग प्राप्त गर्ने नीति अवलम्बन गर्नेछ । आपसी समझदारीको अभिवृद्धिले विकास सहयोगको प्रक्रियालाई अझ बढी सुदृढ बनाउन सकिन्छ भन्ने कुरामा नेपाल सरकारविश्वस्त छ । विद्यमान विभिन्न संस्थागत सम्बन्धहरू समेतको माध्यमबाट नेपालले दातृ पक्ष समक्ष आफ्ना भावना, उपलब्धि तथा समस्याहरू प्रस्तुत गर्ने गरेको छ । साथै देहायका विषयमा दातृसमुदायबाट विशेष समझदारीको अपेक्षा राख्दछ-

(क) **संवेदनशीलता-** नेपालको छुट्टै प्रकारको भौगोलिक अवस्था तथा अन्य विशेषताहरूको कारणले नेपालले अपनाउने विकास नीति र रणनीति स्वतन्त्र र आफ्नै किसिमको हुनेछ । अन्यत्र लागू गरिने नीति नेपालको लागि अनुपयुक्त हुन सक्छ ।

(ख) **छनौटपूर्ण व्यवहार-** नेपाल सरकारवैदेशिक सहायतालाई छनौटपूर्ण र जनताको जीवनस्तर उकास्न प्रत्यक्ष योगदान पुऱ्याउने क्षेत्रहरूमा आकर्षित र केन्द्रित गर्नु पर्ने कुरामा ध्यान दिन चाहन्छ । दातृपक्षको आ-आफ्नो तुलनात्मक लाभ र विशिष्टीकरणको आधारमा आपसी समन्वय राखी सहयोग प्रदान गरोस् भन्ने चाहन्छ । यसबाट नेपाल सरकारलाई विकास सम्बन्धी प्रक्रिया आन्तरिकीकरण गर्न मद्दत पुग्नेछ ।

(ग) **परीक्षण वा प्रयोग गर्ने परिपाटी हटाउने-** नेपाल सरकारप्रविधि लगायत अन्य क्षेत्रमा प्रयोग मात्र गर्ने महँगो परिपाटी हटाउने पक्षमा छ । तर सरकार, दातृपक्ष तथा लाभग्राहीहरूद्वारा गरिने सानो स्तरका अन्वेषणात्मक प्रयासमा भने रोक लगाइने छैन ।

(घ) **वित्तीय अनुशासन कायम गर्ने-** पारदर्शी प्रतिवेदन गर्ने प्रणाली अपनाउने प्रयासस्वरूप वित्तीय अनुशासन कायम गर्न अन्तर्राष्ट्रिय मान्यता प्राप्त लेखा व्यवस्था अनुगमन र लेखापरीक्षण लागू गर्ने तर्फ ध्यान दिइनेछ । साथै वैदेशिक सहयोगमा संचालित आयोजनाको लेखापरीक्षण महालेखा परीक्षकको विभागद्वारा गर्ने व्यवस्थालाई सुनिश्चित गर्नु पर्नेछ ।

(ङ) **अन्तर्राष्ट्रिय र स्थानीय गैरसरकारी संस्थाहरू मार्फत प्रवाहित हुने रकमको पारदर्शिता-** दाताहरूले अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाहरू तथा गैरसरकारी

संस्थाहरू मार्फत गरेको खर्चको सूचना र प्रतिवेदन अनिवार्य रूपमा नेपाल सरकारलाई दिनु पर्नेछ ।

(च) **वित्तीय स्रोतहरूलाई वार्षिक बजेटमा प्रतिबिम्बित गर्ने-** सबै किसिमका सहायता स्रोतहरूलाई पारदर्शी बनाउनुको साथै तिनलाई वार्षिक बजेटमा प्रतिबिम्बित गर्ने व्यवस्था सुनिश्चित गर्नका लागि दातृसमुदायको सहयोग लिइनेछ ।

(छ) **दातृपक्षको कार्यविधिमा सुधार गर्ने-** वैदेशिक सहायतालाई प्रभावकारी बनाउने समग्र रणनीतिको एउटा महत्वपूर्ण अंश दातृपक्षको कार्य प्रणालीमा सुधार गर्नु पनि हो । दातृपक्षसँग भएका सन्धि तथा सम्झौताहरूमा एकरूपता, गुणस्तरयुक्त र प्रचलित कानुन अनुकूल बनाउने सम्बन्धमा वार्ताहरू गरिनेछ ।

७.१७ वैदेशिक सहायता नीतिका उद्देश्यहरू हासिल गर्न र वैदेशिक सहायताको उपयोगमा प्रभावकारिता ल्याउनमा बाधा पुऱ्याउने समस्यामा हल गर्न माथि उल्लेख गरिएका नीतिहरू महत्वपूर्ण छन् । वैदेशिक सहायता नीति दशौं योजनाको समग्र नीति योजनाको एक महत्वपूर्ण तत्व हो । त्यस्तै उपयुक्त रणनीति र नीति संयन्त्रहरूको तर्जुमाद्वारा यी नीतिहरूको कार्यान्वयनमा सहयोग पुग्नेछ ।

## ८. प्रमुख रणनीतिहरू

वैदेशिक सहायता नीति कार्यान्वयन गर्न देहायका रणनीतिहरू अवलम्बन गरिनेछन्:-

८.१ **वृहत् आर्थिक तथा क्षेत्रगत दीर्घकालिन अवधारणा तयार गर्ने-** साधनहरूको उचित बाँडफाँडको लागि बृहत आर्थिक र क्षेत्रगत दीर्घकालिन योजनाहरूको तर्जुमा गर्न आवश्यक पर्छ । यी योजनाहरूले क्षेत्रगत प्राथमिकताहरू लगायत त्यसका लागि आन्तरिक र वाह्य खर्चको आवश्यकता र समग्र आर्थिक योजना तथा खर्च नीतिसँग तिनको सम्बन्धबारे स्पष्ट पारेका हुन्छन् । नेपाल सरकारले क्षेत्रगत कार्यक्रमको अवधारणाको माध्यमबाट विशेष क्षेत्र तथा उपक्षेत्रहरूको आवश्यकता पहिचान गर्ने विषयलाई प्रोत्साहित गर्नेछ । क्षेत्रगत योजनाले देहायका विषयमा जोड दिनेछ-

(क) समग्र राष्ट्रिय लक्ष्यसँग मिल्दो तथा सार्वजनिक खर्च व्यवस्थापनसँग सम्बन्धित सबै पक्षलाई समेटेको क्षेत्रगत अवधारणा ।

(ख) स्पष्ट रूपमा तर्जुमा भएको क्षेत्रगत रणनीति ।

(ग) दाताको लागि उपयुक्त भूमिका र उनीहरूको सहायता ।

(घ) सम्भव भएसम्म सम्बन्धित दातृपक्षसँग समेतको परामर्शमा कार्यान्वयन व्यवस्था ।

(ङ) दीर्घकालिन प्राविधिक सहायताको आवश्यकता पहिचान ।

(च) साझेदारहरूबाट कार्यक्रमको उपलब्धिका लागि संयुक्त उत्तरदायित्व बहन गर्ने सहमति ।

(छ) दातृपक्षद्वारा कार्यक्रम वा आयोजना सहयोग कार्यक्रम अन्तर्गत खर्च गर्ने प्रतिबद्धता ।

८.२ **पारदर्शिता र उत्तरदायित्व सुनिश्चित गर्ने-** अदक्षता तथा विकृति हटाउन, भ्रष्टाचार नियन्त्रण गर्न, निर्णय प्रक्रिया र नीति निर्माणलाई उत्तरदायित्वपूर्ण बनाउन तथा वैदेशिक सहयोगमा संचालित विकास गतिविधिहरूलाई बढी फाइदाप्रद बनाउन वैदेशिक सहायता व्यवस्थापनमा पारदर्शिता सुनिश्चित गरिनेछ । यस्तै वैदेशिक सहायताको व्यवस्थापनमा जनताको विश्वास बढाउन, अधिकतम प्रतिफल हासिल गर्न र साधनको दुरूपयोग रोक्न सहायता व्यवस्थापनमा कडाईका साथ आर्थिक अनुशासन कायम गरिनेछ । यस सम्बन्धमा देहाय बमोजिमको संयन्त्रको व्यवस्था गरिनेछ-

(क) वैदेशिक सहायताबाट संचालित कार्यक्रम तथा आयोजनाहरूका प्रत्येक क्रियाकलाप, लागत तथा वित्तीय स्रोतका बारेमा सबै सरोकारवालालाई जानकारी उपलब्ध गराउने व्यवस्था गरिनेछ ।

(ख) विशेषज्ञ, परामर्शदाता तथा आयोजनाका मुख्य कर्मचारीहरूको छनौट सम्बन्धी तथा खरिद, लीलाम बिक्री, पूर्वयोग्यता निर्धारण, ठेक्कापट्टा तथा निर्णय गर्दा अपनाएका मापदण्ड, प्रक्रिया तथा त्यसमा संलग्न व्यक्तिका बारे सार्वजनिक सूचना प्रवाह गरिनेछ ।

(ग) वैदेशिक सहायताबाट संचालित क्रियाकलापहरूको पूर्वसम्भाव्यता, सम्भाव्यता, लेखापरीक्षण, मूल्यांकन, उपलब्धि तथा अन्य विषयको प्रतिवेदन सम्बद्ध इच्छुकहरूलाई उपलब्ध गराइनेछ ।

(घ) वैदेशिक सहायता स्रोतलाई नेपाल सरकारको बजेटमा समावेश गरी त्यसको प्रयोग बजेट प्रक्रिया मार्फत् हुने व्यवस्था मिलाइनेछ ।

(ङ) आयोजना व्यवस्थापन सम्बन्धी चासो, गुनासो र उजुरी सुन्ने व्यवस्था गरी कारबाही टुङ्गो लगाउन निश्चित समयावधि तोक्ने व्यवस्था गरिनेछ ।

(च) भ्रष्ट क्रियाकलापहरू विरुद्ध कानुनी व्यवस्थाहरूको कडाईका साथ पालना गराउन, पुरस्कार र दण्डको व्यवस्था कार्यान्वयन गर्ने र सार्वजनिक सेवामा आचारसंहिताको पूर्णपालना गराउने व्यवस्था गरिनेछ ।

(छ) वैदेशिक सहायता सम्बन्धी क्रियाकलापहरूमा आर्थिक अनियमितता रोकथाम सम्बन्धी कार्ययोजनाको तयार गरी कडाईका साथ लागू गर्ने र त्यसको प्रभावकारी अनुगमन गर्ने व्यवस्था मिलाइनेछ ।

(ज) महत्वपूर्ण पदहरूमा स्वच्छ, योग्य र दृढ व्यक्तित्वलाई छनौट गर्ने व्यवस्था गरिनेछ ।

(झ) एजेन्टहरूलाई भुक्तानी गरिने कमिशनको जानकारी अनिवार्य रूपमा उल्लेख गर्नु पर्ने व्यवस्था गरिनेछ ।

(ञ) भ्रष्टाचार नियन्त्रण गर्न र दोषी उपर कारबाही गर्न दबाब दिने कार्यमा संचार माध्यम, नागरिक समाज, संस्था तथा व्यक्तिहरूलाई प्रोत्साहित गरिनेछ ।

(ट) ऐन, नियममा विद्यमान तजबिजी अधिकार हटाइनेछ ।

(ठ) भ्रष्ट व्यक्ति उपर गरिने निर्धारित कारबाहीमा कुनै अपवाद छाडिने छैन ।

८.३ **वैदेशिक सहायताको गुणात्मकता अभिवृद्धि गर्ने-** वैदेशिक सहायताको गुणात्मक अभिवृद्धि गर्नु नेपाल सरकारको एक प्रमुख उद्देश्य हुनेछ । राम्रा आयोजनाहरू तथा आयोजना सम्बन्धी असल प्रचलन (Best Practices) पत्ता लगाएर त्यसबारे जानकारी प्रदान गर्न सम्बद्ध दातृपक्षसँग संयुक्त पुनरावलोकन जस्ता नियमित अनुसन्धानात्मक अध्ययन गर्नु यो रणनीतिको एक अंग हो । यस्तै गरिबी निवारण र आर्थिक वृद्धिमा वैदेशिक सहायताको योगदान बढाउन यसको उत्पादकत्व र प्रतिफललाई अधिकतम बनाइनेछ । वैदेशिक सहायता स्वीकार गर्दा सहायताका शर्तहरू आयोजनाको उपयुक्त कार्यान्वयन गर्न सहयोग पुग्ने किसिमका भए नभएको विस्तृत छानविन गर्ने व्यवस्था मिलाइनेछ । यस सन्दर्भमा सम्बद्ध पक्षहरूसँग पर्याप्त परामर्श र विश्लेषण गरिनेछ । यस सम्बन्धमा अबलम्बन गरिने अन्य उपायहरू निम्नानुसार छन्-

(क) देशको वास्तविकता, आयोजनाको उद्देश्य, विकास रणनीति र नीतिहरूका सम्बन्धमा वैदेशिक सहायताका शर्तहरूको परीक्षण गर्ने ।

(ख) प्रस्तावित शर्तहरू पूरा गर्ने सन्दर्भमा सम्बद्ध पक्षहरूबाट प्रतिबद्धता र सहयोग प्राप्त गर्ने ।

(ग) नीतिगत शर्तहरूको सम्बन्धमा सम्बद्ध अधिकारी, निकायको औपचारिक स्वीकृति प्राप्त गर्ने ।

(घ) कार्यान्वयन गर्ने निकायको सम्बन्धमा सम्बद्ध अधिकारी, निकायको औपचारिक स्वीकृति प्राप्त गर्ने ।

८.४ **वैदेशिक सहायताको समन्वय व्यवस्थालाई सुदृढ गर्ने-** वैदेशिक सहायताको प्रवाहलाई राष्ट्रिय विकास नीति तथा प्राथमिकता अनुरूप सुनिश्चित गर्न र सहायताको व्यवस्थापनमा कुशलता, प्रभावकारिता र सामञ्जस्य अभिवृद्धि गर्न सहायता, समन्वयको प्रक्रियालाई सुदृढ पारिनेछ । सहायताको व्यवस्थापन र समन्वयमा सरकारले नेतृत्वदायी भूमिका निर्वाह गर्नेछ । वैदेशिक सहायताको समन्वय गर्न स्थापित पद्धतिको अर्थ मन्त्रालय राष्ट्रिय योजना आयोग र सम्बद्ध मन्त्रालयले अवलम्बन गर्नु पर्नेछ । दातृपक्षका क्रियाकलापहरूको राष्ट्रिय, क्षेत्रीय र स्थानीय तहमा र विकासका प्रमुख क्षेत्रगत आधारमा समन्वय गर्ने व्यवस्था मिलाइनेछ । यस सन्दर्भमा सम्बद्ध मन्त्रालयहरू र दातृपक्षहरूका बीच क्षेत्रगत विषयमा संयुक्त समन्वय वैठकको व्यवस्था गर्न प्रोत्साहित गरिनेछ । दाताको सहायतामा संचालित आयोजनाहरूको व्यवस्थापन र नीति विश्लेषणको प्रयोजनको लागि सूचनाको व्यवस्थामा सुधार गर्न अर्थ मन्त्रालय र राष्ट्रिय योजना आयोगले सहायताको उपयुक्त किसिमले वर्गीकरण गरी अभिलेख राख्ने व्यवस्था गरिनेछ । सरकारका विभिन्न निकायमा डाटावेश स्थापना गरिनेछ । दाताहरूको समन्वयमा नेतृत्वदायीको भूमिका निर्वाह प्रभावकारी ढंगले गर्न अर्थ मन्त्रालयको क्षमता सुदृढ गरिनेछ । यसको लागि सबै सरोकारवालाबाट समर्थन प्राप्त गरिनेछ ।

८.५ **आयोजना, कार्यक्रमको पहिचान, छनौट, डिजाइन तथा दिगोपना हासिल गर्ने-** उपयुक्त स्वामित्व र दिगोपनाको सम्बन्धमा विशेष ध्यान दिएर वैदेशिक सहायताबाट संचालित आयोजना, कार्यक्रमको दिगोपना सुनिश्चित गरिनेछ । उपयुक्तता र दिगोपनाको लागि आयोजना विश्लेषण विस्तृत रूपमा गरिनेछ । सबै आयोजनाहरू सामाजिक, आर्थिक वित्तीय व्यवस्थापकीय, प्राविधिक र वातावरणीय पक्षबाट परीक्षण गरिनेछन् । यस सम्बन्धमा अवलम्बन गरिने अन्य केही उपायहरू देहाय अनुसार हुनेछन्-

(क) अनुत्पादक र अनावश्यक आयोजनाहरूलाई हटाउन र साधनलाई प्राथमिकताका क्षेत्रमा केन्द्रीत गर्न प्रोत्साहित गरिनेछ ।

(ख) राष्ट्रिय विकासको उद्देश्य र दिगोपनाको मापदण्ड पूरा गर्ने आयोजनाहरूको मात्र छनौट गरिनेछ ।

(ग) सान्दर्भिकता, सम्भाव्य फाइदा, कार्यदक्षता र प्रभावकारीताको आधारमा आयोजनाहरूको क्षेत्रगत र राष्ट्रियगत र वरियत क्रमसूची (Merit Order) कायम गर्ने व्यवस्था गरिनेछ ।

(घ) आयोजनाको वरियता क्रमअनुसार वैदेशिक सहायताको रकम विनियोजन गरिनेछ ।

(ङ) विगतका लगानीको बढी उपयोग हुने गरी नयाँ आयोजनाहरूलाई आवद्ध गरिनेछ ।

(च) विकासका प्राथमिकता र कार्यक्रमसँग दातृपक्षको प्राथमिकता र तुलनात्मक लाभका बीच तालमेल मिलाउने गरी सहायताको परिचालन गरिनेछ ।

(छ) नेपालमा अवलम्बन एवं संचालन गर्न सकिने उपयुक्त स्तरको प्रविधिको आधारमा आयोजनाको तयारी र निर्माण गरिनेछ ।

(ज) विद्यमान स्थानीय संस्थागत र प्रशासनिक क्षमताको आधारमा आयोजनाहरूको छनौट र निर्माण गरिनेछ ।

(झ) विकास क्रियाकलापहरूलाई वातावरण मैत्री बनाउनुको साथै लैङ्गिक विषय, साँस्कृतिक र संस्थागत संवेदनशीलता समेतलाई ध्यानमा राखिनेछ ।

(ञ) आयोजनाचक्रको प्रत्येक चरणमा नागरिक समाज र लाभग्राही समूहलाई संलग्न गराइनेछ र स्थानीय स्तरको आयोजनाहरूको कार्यान्वयनमा लाभग्राही समूहको पूर्ण सहयोग र प्रतिबद्धता प्राप्त गरिनेछ ।

८.६ **वैदेशिक सहायता व्यवस्था सूचना प्रणालीको विकास गर्ने-** नीति, योजना र अनुगमन तथा मूल्यांकनको लागि वैदेशिक सहायता सम्बन्धी सूचनाको महत्वलाई ध्यानमा राखी सूचनाको आधार निर्माण गर्ने, सूचनालाई नियमित रूपमा अद्यावधिक गर्ने र आवश्यकता अनुसार सूचना प्रवाह गर्ने व्यवस्था मिलाइनेछ । यस्ता सूचनाका आधारशीलामा खर्चका स्रोतहरू, आयोजना, कार्यक्रमका आवश्यक तत्वहरू, सहायताको प्रकार, सहायता उपयोग (Disburesement) को स्थिति, सहायताका शर्तहरू, ऋणमोचन सम्बन्धी दायित्व, आदिसँग सम्बन्धित सूचनाहरू समावेश गरिनेछन् ।

८.७ **संस्थागत प्रभावकारिता बढाउने-** वैदेशिक सहायताको उपयोगसँग सम्बन्धित संस्थाहरूको प्रभावकारिता बढाउन आवश्यक उपायहरूको अवलम्बन गरिनेछ । यस्ता उपायहरूमा आयोजनाको कार्यान्वयन गर्ने संस्थाहरूको क्षमता सुदृढ गर्ने, वैदेशिक सहायतामा

आधारित प्रत्येक क्रियाकलापको उद्देश्य र कार्य सम्बन्धी विशेषताको आधारमा मानव संशाधन विकास योजनाको तर्जुमा र कार्यान्वयन गर्ने, आयोजनाका मुख्य पदहरूमा सक्षम व्यक्तिको नियुक्ति र विशेषज्ञता, इमान्दारिता, क्षमता तथा प्रतिबद्धताको आधारमा कर्मचारीको खटनपटन गर्ने व्यवस्था मिलाउने, आयोजनाका कर्मचारीको अधिकार तथा जिम्मेवारीलाई स्पष्ट परिभाषित गर्ने आदि समावेश गरिनेछ ।

## ९. मुख्य नीति संयन्त्र

९.१ व्यवहारिक र कार्यान्वयन योग्य नीति संयन्त्रहरूको माध्यमबाट मात्र नीति र कार्यनीतिहरूको कार्यान्वयन गर्न सकिन्छ । नीतिगत उद्देश्यहरूलाई व्यवहारमा उतार्न नीति, कार्यनीति, साधन र संस्थागत व्यवस्थाका बीच स्पष्ट सम्बन्ध स्थापित गर्नु यसको एक महत्वपूर्ण पक्ष हो । उपयुक्त नीति संयन्त्र र संस्थागत व्यवस्थाको पहिचानको अभावमा यी नीति तथा कार्यनीतिहरू कार्यान्वयन हुन सक्दैनन् ।

९.२ **साधनको विवेकपूर्ण बाँडफाँड र व्यवस्थापन कार्यविधिहरू-** अरू कुराको अतिरिक्त यथार्थपरक बजेट प्रणाली, प्राथमिकता किटिएको सार्वजनिक खर्च कार्यक्रम र आयोजना छनौटको विवेकपूर्ण संयन्त्रको सुनिश्चिततामा सहायताको प्रभावकारिता निर्भर रहन्छ । यस सम्बन्धमा बजेट तर्जुमा प्रक्रियालाई देहाय बमोजिम सुधार गर्न ध्यान दिइनेछ-

(क) अर्थ मन्त्रालय, राष्ट्रिय योजना आयोग र सम्बद्ध मन्त्रालय बीच विकास कार्यक्रमको योजना र बजेट तर्जुमा गर्ने कार्यमा मध्यकालिन खर्च व्यवस्थाको माध्यमबाट सशक्त समन्वय गरी वार्षिक बजेट र राष्ट्रिय योजना बीच समन्वय स्थापना गरिनेछ ।

(ख) क्षेत्रगत र राष्ट्रिय विकासको लक्ष्य प्राप्ति गर्ने सम्भाव्यताको परिप्रेक्ष्यमा आयोजनाको स्पष्ट रूपमा परिभाषित प्राथमिकता र वरियताक्रम अनुरूप बजेट व्यवस्था गरिनेछ । निर्धारित समयभित्र आयोजना सम्पन्न गर्न र समयावधि लम्बिँदा बढ्ने लागत रोक्न संचालनमा रहेका आयोजनाहरूको साधनको आवश्यकता पूरा गर्नका लागि अग्रिम योजना (Forward Planning) को अवधारणा अवलम्बन गर्न जोड दिइनेछ ।

(ग) प्राथमिकता प्राप्त कार्यक्रम विकास बजेटमा समावेश गर्ने कार्यलाई व्यवस्थित गर्न वैदेशिक सहायता संलग्न आयोजनालाई विकास बजेटमा समावेश गर्नु पूर्व विस्तृत रूपमा छनौट र मूल्यांकन प्रक्रिया पूरा गर्नु पर्ने व्यवस्थालाई अनिवार्य गराइनेछ ।

९.३ **संयुक्त कार्यक्रमको अवधारणा-** साधन स्रोतलाई दाताहरूको प्राथमिकता र उत्कृष्टताको आधारमा प्राथमिकता प्राप्त क्षेत्रतर्फ प्रवाहित गर्न र विभिन्न दातृराष्ट्र तथा संस्थाहरूको संलग्नता आवश्यक भएका ठूला आयोजनामा संयुक्त लगानी प्रोत्साहित गरिनेछ । यस्तो कार्यक्रमहरूको तर्जुमा, स्रोत व्यवस्थापन र कार्यान्वयन विधि नेपाल सरकारको पूर्व परामर्श र नेतृत्वमा हुनेछन् । यसबाट कामको दोहोरोपन हट्नुका साथै विकासको लागि प्रभावकारी साझेदारी स्थापित हुन जानेछ । साधनको उपयोग लक्ष्य भन्दा कम हुनुका कारणहरू पत्ता लगाउन र समाधानका लागि सुझाव पेश गर्न दातृपक्ष र सहायता लिने पक्षले संयुक्त रूपमा छानविन गर्ने व्यवस्था मिलाइनेछ ।

९.४ **प्रभावकारी आयोजना तर्जुमा एवं कार्यान्वयन-** आयोजनाको योजना तर्जुमा सम्बन्धी अभ्यासहरू आयोजनाचक्रको सुरुमा गरिनेछ । यस्ता अभ्यासहरूले अन्य कुराका अतिरिक्त आयोजनाको औचित्यको पुष्टि, वैदेशिक स्रोतको आवश्यकता, कार्यान्वयन तालिका लगायत आयोजनाको पहिचान, तर्जुमा, छनौट तथा अनुगमन एवं मूल्यांकनका समग्र पक्षमा जोड दिइनेछ । आयोजनाको योजना तर्जुमा अभ्यास गर्ने संस्थागत क्षमता अभिवृद्धि गरिनेछ ।

९.५ वैदेशिक सहायता तथा सरकारी खर्चमा संचालित आयोजनाको कार्यान्वयनमा प्रभावकारिता हासिल गर्ने तर्फ नेपाल सरकारले ध्यान दिनेछ । यसको लागि निम्नलिखित पक्षमा जोड दिइनेछ-

(क) नेपाल सरकारको तर्फबाट व्यहोर्नु पर्ने खर्च (Counterpart Fund) समयमा नै उपलब्ध गराइनेछ ।

(ख) आयोजना व्यवस्थापकहरूलाई आयोजनास्थलमा नै शीघ्र निर्णय गर्ने प्रक्रियामा सहयोग पुऱ्याउन निर्णय प्रक्रियाको विकेन्द्रीकरण र अधिकार प्रत्यायोजनको कार्यलाई प्रभावकारी बनाउनुका साथै उनीहरूलाई आफ्नो कार्यप्रति जिम्मेवार बनाइनेछ ।

(ग) खरिद सम्बन्धी समस्या हटाउन बोलकबोल कागजातको मापदण्ड (Standard Biding Document) व्यवहारमा ल्याइनेछ ।

९.६ **आयोजनाको मूल्यांकन, प्रभाव अध्ययन, सुपरिवेक्षण र अनुगमनमा सुधार-** प्रमुख आयोजनाहरूको प्रभावकारी आयोजना मूल्यांकन र प्रभावकारी अध्ययन गर्ने व्यवस्था गरिने छ । सरोकारवालाहरू र इच्छुकहरूको आवाजलाई समेट्न सक्ने पृष्ठपोषण संयन्त्र (Feedback Mechanism) को स्थापना गरिनेछ । आयोजना प्रभावको अध्ययनबारे

सार्वजनिक सुनुवाईको व्यवस्था गरिनेछ । प्रत्येक क्षेत्रमा संचालित एक निश्चित् संख्याका आयोजनाहरूको विशेषज्ञहरूद्वारा नियमित रूपमा अध्ययन गराइनेछ । समस्या समाधान गर्न र लक्षित उपलब्धि हासिल गर्न आयोजनाको सुपरिवेक्षण तथा अनुगमन व्यवस्थालाई सुदृढ पारिनेछ । सुपरिवेक्षण तथा अनुगमनमा प्रभावकारीता ल्याउन कार्यसंचालन तहमा आयोनजा अनुगमन समितिहरू गठन गर्न पहल गरिनेछ ।

९.७ **"साझा कोष" को अवधारणालाई प्रोत्साहित गर्ने-** संयुक्त लगानीको लागि प्रस्तुत भएका कार्यक्रमहरूमा साझा कोषको अवधारणालाई प्रोत्साहित गरी आयोजना कार्यान्वयन निकायलाई विभिन्न दातृ राष्ट्र वा संस्थाको आवश्यकता अनुसार भिन्नाभिन्नै प्रतिवेदन प्रस्तुत गर्नु नपर्ने तथा यी नियकाहरूको सीमित क्षमतामा अधिक चाप नपर्ने व्यवस्था गरिनेछ । हालै विकसित डालो खर्च पद्धति (Basket Funding) को अवधारणा अनुसार दातृ समूह मध्येका प्रत्येकको लागि समान रूपमा लागू हुने गरी प्रतिवेदन दिने सरल ढाँचा प्रयोगमा ल्याइनेछ । यस किसिमको ढाँचामा आयोजनाको लागतको बाँडफाँड कार्य नेपाल सरकारर दातृपक्षहरू बीच आपसी निर्णयले निर्धारण गरिनेछ । यस किसिमको कार्यक्रम कार्यान्वयनमा नेपाल सरकारले पूर्ण स्वामित्व वहन गर्नु पर्ने हुन्छ । कार्यक्रमको प्रतिफल र रकमको उपयोगमा नेपाल सरकारलाई उत्तरदायी बनाइनेछ । तर सरकारले हालको जस्तो छुट्टै किसिमले आयोजना संचालन गर्ने व्यवस्था अनुसार आयोजना संचालन गर्न पनि दिइनेछ । यसरी आयोजना तथा कार्यक्रमहरूको खर्च व्यवस्था दुई द्वार प्रणालीमा आधारित हुनेछ । जुनसुकै द्वारको भए पनि आयोजना क्षेत्रगत प्राथमिकतासँग मिल्दो हुनु पर्नेछ ।

९.८ **वित्तीय व्यवस्थापनमा सुधार गर्ने-** वैदेशिक सहायतामा संचालित आयोजनाहरूको वित्तीय व्यवस्थापनलाई देहाय बमोजिम सुदृढीकरण गरिनेछ-

(क) बजेट निकासालाई खर्च गर्ने इकाईले बुझाउनु पर्ने विस्तृत खर्च प्रतिवेदनका साथै आयोजनाको भौतिक प्रगति सूचकाङ्कसँग जोडिनेछ ।

(ख) वैदेशिक सहायतामा संचालित आयोजना तथा कार्यक्रमको हकमा शोधभर्ना लिने कार्यलाई यथासमयमा सम्पादन गर्ने प्रक्रिया सुनिश्चित गरिनेछ ।

(ग) लेखापरीक्षण प्रतिवेदन आर्थिक वर्ष समाप्त भएको छ महिनाभित्र तयार गरिनेछ । खर्च विवरण पेश गर्न ढिलो गरेमा कारबाही गर्ने व्यवस्था गरिनेछ ।

(घ) दातृपक्षसँग पूर्व सहमति लिइएको अवस्थामा बाहेक वैदेशिक सहायतामा संचालित आयोजनामा सम्झौता हुनु अगावै खर्च गर्न दिइने छैन ।

(ङ) वित्तीय जवाफदेहीपनको विकास गरिनेछ ।

(च) बजेट निकासा गर्ने प्रक्रिया र आधारलाई पूर्ण पारदर्शी बनाइनेछ ।

९.९ **स्वीकृत वैदेशिक सहायताको उपयोग (Disbursements) मा सुधार गर्ने-** स्वीकृत वैदेशिक सहायताको उपयोग गर्न र स्वीकृत सहायता राशी र यिनको उपयोगका बीचको खाडल कम गर्न आवश्यक संयन्त्रको व्यवस्था गरिनेछ । यो समस्या समाधानको लागि विभिन्न तहमा हुनसक्ने ढिलाई कम गर्न नेपाल सरकारले आवश्यक व्यवस्था गर्नेछ । यसको लागि आयोजनाको गतिविधि र समय तालिकामा बाधा उत्पन्न गराउने समस्या तथा कठिनाइहरू कम गरी आयोजना व्यवस्थापनमा दक्षता अभिवृद्धि गर्न उच्च प्राथमिकता दिइनेछ । यसैगरी सोधभर्ना पद्धति र प्रक्रियाहरूको पुनरावलोकन गरी यसलाई अरू गतिशीलता दिन आवश्यक कदम चालिनेछ ।

९.१० **खरिद प्रक्रियामा सुधार गर्ने-** वित्तीय साधनको पूर्ण उपयोगको लागि व्यवस्थित खरिद नीति र प्रक्रिया आवश्यक हुन्छ भन्ने कुरामा नेपाल सरकारविश्वस्त छ । नेपाल सरकारले खरिद प्रक्रियालाई अरू पारदर्शी बनाउनेछ । अन्तर्राष्ट्रिय रूपमा स्वीकृत सिद्धान्त र व्यवहार उदाहरणको लागि, UNCITRAL को खरिद प्रक्रिया नमूना कानुन, युरोपियन निर्देशिका, विश्व व्यापार संघको खरिद प्रक्रिया सम्झौता आदि बमोजिम प्रभावकारी राष्ट्रिय खरीद प्रणालीको स्थापना गरिनेछ । यसको साथ खरिद प्रक्रिया सम्बन्धमा नेपाल सरकारर दातृपक्षको बीचमा रहेको नीतिगत र वित्तीय कारोबार सम्बन्धी दूरीलाई यथासम्भव न्यून गर्दै लगिनेछ ।

९.११ **प्रक्रियागत सुधार-** अनुदान र ऋण दुबै सहायतामा प्रभावकारिता ल्याउन विभिन्न प्रक्रियागत सुधारहरू गरिने छन् । अन्य कुराका अतिरिक्त ती देहाय बमोजिम हुनेछन्-

(क) वैदेशिक सहायता अन्तर्गत संचालित गतिविधिहरूमा करलगायत अन्य छुट दिने विषयलाई प्रचलित कानुनसँग आवद्ध गर्दै लगिनेछ । साथै छुटको निश्चित आधार बनाई एकरूपता ल्याउने प्रयास गरिनेछ ।

(ख) सुधारको प्रक्रिया, समन्वय र वाह्य स्रोत व्यवस्थापनमा एकरूपता ल्याई वैदेशिक सहायतामा दक्षता र प्रभावकारिता बढाउन विदेशी दातृराष्ट्र र संघ संस्थाहरूसँग विगतमा सम्पन्न सन्धि, सम्झौता, समझदारीका शर्त तथा अन्य प्रावधानहरूलाई स्पष्ट पारिनेछ ।

(ग) ऋणको बोझ कम गर्ने सन्दर्भमा वैदेशिक सहायता, खासगरी ऋण सहायता स्वीकार गर्ने सम्बन्धमा आवश्यक मापदण्ड तयार गरी कार्यान्वयन गरिनेछ।

९.१२ माथि उल्लेख भएका नीति र रणनीतिहरूलाई कार्यरूप दिन एउटा निर्देशिका तयार गरी लागू गरिनेछ। यसले वैदेशिक सहायताको प्रभावकारी परिचालनमा नीतिगत र संस्थागत व्यवस्थाका विषयमा मार्गनिर्देश गर्नेछ। यसले वैदेशिक सहायता सम्बन्धमा गरिने निर्णय प्रक्रियामा सरलता, एकरूपता र शीघ्रता ल्याउनमा सहयोग पुऱ्याउने हुन्छ।

## १० **सरकार दातृपक्षबीच अन्तरक्रिया तथा संवाद्**

१०.१ सरकार र दातृपक्ष बीच हुने अन्तरक्रिया र वार्ताको गुणस्तरमा सुधार ल्याउन विभिन्न उपायहरू अवलम्बन गरिनेछन्। यस सम्बन्धमा विगतको नेपाल परामर्शदातृ समूहलाई हाल नेपाल विकास मञ्चको रूपमा परिणत गरिसकिएको छ। नेपाल विकास मञ्चललाई विकास सम्बन्धी उच्चस्तरीय नीतिगत छलफलको केन्द्रीय मञ्चको रूपमा परिणत गर्न थप कदम चालिनेछ। यस मञ्चमा मुलुकमा उठेका तथा दाताले उठाएका बृहत्तर विकासका सवालसँग वैदेशिक सहायताको मुद्दालाई आवद्ध गर्न विशेष ध्यान दिइनेछ। राष्ट्रिय तथा क्षेत्रगत तहमा प्रमुख नीति, रणनीति तथा कार्यान्वयनका विविध पक्षलाई समाधान गर्न स्थानीय स्तरमा सहायता समूहको बैठक गरिनेछ। यसैगरी विषयगत र क्षेत्रगत तहमा हुने छलफलहरूमा सरकारको नेतृत्वदायी भूमिका बढाउँदै लगिनेछ।

१०.२ अन्तर्राष्ट्रिय स्तर तथा बहुपक्षीय क्षेत्रमा विकास साझेदारीको विषयमा चर्चा परिचर्चा हुने भएता पनि देशभित्र यसको पूर्ण पालना भएको महसुस गरिने गरिँदैन। यसैले सरकार दातासँग हुने वार्ताको एक महत्वपूर्ण उद्देश्य देशभित्र विकास साझेदारीको सही अर्थ र भावना अनुरूप काम गर्नु हुनेछ। यस किसिमको विकासलाई सशक्त बनाउन सम्बद्ध सबै पक्षका बीच सूचनाहरूको प्रवाहमा महत्वपूर्ण सुधार गरेर नेपाल सरकारर दातृपक्षका कार्यहरूलाई बढी पारदर्शी बनाइनेछ।

१०.३ **विद्यमान संस्थागत व्यवस्थाको अधिकतम उपयोग गर्ने-** वैदेशिक सहायताको व्यवस्थापनमा प्रभावकारिता ल्याउन देशमा रहेका विद्यमान विभिन्न संस्थागत ढाँचाहरू सान्दर्भिक रहेका छन्। यी संस्थागत व्यवस्थामा-

(क) वैदेशिक स्रोतको व्यवस्थापनमा सुधार गर्ने क्रममा उठेका सरोकारहरूको निराकरण, वैदेशिक सहायताको दक्ष उपयोग एवं वाह्य सहयोगको समन्वय गर्ने केन्द्रीय संयन्त्रको रूपमा रहेको विद्यमान वैदेशिक सहायता समन्वय महाशाखाको स्तर उकासी वैदेशिक आर्थिक सम्बन्ध विभाग बनाइनेछ।

(ख) वैदेशिक सहायतामा संचालन हुने आयोजनाहरूको अनुमोदन छिटोछरितो रूपमा गर्न अर्थ मन्त्रीको अध्यक्षतामा एउटा समितिको गठन गरिनेछ । उक्त समितिमा राष्ट्रिय योजना आयोगका उपाध्यक्ष, कानुन, न्याय तथा संसदीय व्यवस्था मन्त्रालयका सचिव, सम्बन्धित मन्त्रालयका सचिव, अर्थ सचिव र अर्थ मन्त्रालय वैदेशिक सहायता समन्वय महाशाखाका सहसचिव सदस्य रहनेछन् । अर्थ मन्त्रालय, वैदेशिक सहायता समन्वय महाशाखाले उक्त समितिको सचिवालयको रूपमा काम गर्नेछ ।

(ग) प्रक्रियागत रूपमा सम्बन्धित सरकारी निकायहरूको फलदायी र प्रभावकारी सहभागिता बढाई आर्थिक कूटनीतिको प्रभावकारिता अभिवृद्धि गरिनेछ ।

(घ) वैदेशिक सहायता नीतिको कार्यान्वयनमा सहयोग पुऱ्याउन नेपाल सरकारको विभिन्न मन्त्रालय मातहतका योजना महाशाखाहरूको आयोजना तयारी, मूल्यांकन सुपरिवेक्षण र अनुगमन गर्ने विद्यमान क्षमतामा अभिवृद्धि गरी तिनलाई सुदृढीकरण गरिनेछ ।

(ङ) समाज कल्याण परिषद्लाई सुदृढीकरण गरी गैरसरकारी संस्था तथा अन्तर्राष्ट्रिय गैरसरकारी संस्थाको सेवामा सहयोग पुऱ्याउने एकद्वारका रूपमा अघि बढाउनुका साथै यस सम्बन्धमा परिषद्लाई केन्द्रविन्दु (Focal Point) को रूपमा विकास गरिने छ ।

१०.४ **पुनरावलोकन संयन्त्र-** राष्ट्रिय योजना आयोगले विकास आयोजना तथा कार्यक्रमहरूको पुनरावलोकन गर्ने नेतृत्वदायी भूमिका निर्वाह गर्नेछ । निरन्तर रूपमा सुपरिवेक्षण, अनुगमन तथा मूल्यांकन र प्रभाव अध्ययनको माध्यमबाट मात्र आयोजनाहरूको दक्षतापूर्वक कार्यान्वयन गर्न सकिन्छ । हालसम्म यी नियमित रूपमा गरिँदैनन् । समग्र आयोजना व्यवस्थापनमा यी पक्षहरूलाई विशेष जोड दिइनेछ । आयोजनाका सम्बन्धमा सरोकारवालाहरूले आफ्ना विचारहरू राख्न सक्ने किसिमको व्यापक अवसरहरू सिर्जना हुन सक्ने सशक्त पृष्ठपोषण संयन्त्र (Feedback Mechanism) को व्यवस्था मिलाइनेछ । प्रतिवेदन प्रणालीलाई प्रभावकारी बनाएर यस्ता प्रतिवेदनको आधारमा नीति निर्माता तथा आयोजना कार्यान्वयनकर्ताका बीच निकट अन्तरक्रिया हुन सक्ने व्यवस्था मिलाइनेछ । वैदेशिक सहायताबाट संचालित आयोजना तथा कार्यक्रमहरूको नियमित रूपमा मूल्यांकन अध्ययन गर्न एक योजना तयार गरिनेछ ।

११. **कार्यान्वयनको कार्यसूची-**

११.१ दशौं योजना र गरिबी निवारण रणनीतिपत्रले अघि सारेका गरिबी निवारण तथा विकासका उद्देश्य र लक्ष्य पूरा गर्नमा वैदेशिक सहायता नीतिको समुचित कार्यान्वयनले मार्ग प्रशस्त गर्ने हुँदा नेपाल सरकारवैदेशिक सहायता नीतिको कार्यान्वयन गर्न दृढता र संवेदनशीलताका साथ प्रतिबद्ध रहेको छ ।

११.२ वैदेशिक सहायता नीतिले एउटा महत्वपूर्ण र वास्तविक कार्यसूची अगाडि राखेको छ । दातृसमुदाय र नेपाली सरोकारवाला दुबै पक्षले लामो समयदेखि देखाउँदै आएका चासोहरूको समाधानार्थ यस किसिमको वृहत् (Comprehensive) प्रयासको आवश्यकता रहेको विषयमा नेपाल सरकारविश्वास राख्दछ । यस किसिमको प्रयासका लागि विकासका सहयात्रीहरू सबैको समय, प्रतिबद्धता, समझदारी र इच्छाशक्ति चाहिन्छ । यसको सफल कार्यान्वयनबाट नेपालका विकास सहयात्रीहरूबीच प्रभावकारी समझदारी कायम गर्ने आधार हुनेछ र नेपालको गरिबी निवारणको प्रयासमा चुनौतिपूर्ण विविध स्थितिबारे नेतृत्व प्रदान गर्न सक्षम हुनेछ । यो नीतिलाई वास्तविकतामा परिणत गर्नु नेपाल र दातृसमुदायको सामु रहेको एक साझा चुनौति पनि हो ।